मेरो भ्रमण र मैले प्रत्यक्ष देखेका

# गृहयुद्धका पीडा

इराक
अफगानिस्तान
मेसोडोनिया
पूर्वी टिमोर
नेदरल्याण्ड
बेलिज
बेलायत
ब्रुनाई
फिजी
मलेसिया
सिंगापुर
फ्रान्स

विश्वास दीप तिगेला




## परदेशमा सिर्जनाको मुहान

"जिन्दगी एउटा यात्रा हो, अनि जिन्दगी एउटा भ्रम पनि रहेछ ।"

कविता अथवा गुढ दर्शनजस्ता यी अभिव्यक्ति भावुक एक परदेशी नेपालीको हो । उनी दर्शन मिसिएका निवन्धहरू लेख्छन्, आफ्ना अक्षर र शब्दहरूद्वारा युगको पीडालाई आत्मसाथ गर्छन् ।

विश्वासदीप तिगेला संस्मरण र बैचारिक निवन्धका स्रष्टा हुन् । उनले प्रत्यक्ष भोगेका पीडासित मेरो आत्मसाक्षात्कार भएको छ । उहाँका समग्र रचना पढेपछि विश्वासजीको निजी अनुभूतिको माझमा पुगें ।

प्रस्तुत पुस्तकमा आन्तरिक द्वन्द्वले ग्रस्त देशहरूको अवस्था, त्यसको कारण र परिणामबारे निकै सटिक र वस्तुगत विश्लेषण गरेका छन्, लेखक तिगेलाले । अफगानिस्थान, मेसेडोनिया, पूर्वी टिमोर, फिजी, ब्रुनाई, इराक, मलेसिया आदि देशहरूको चित्रणमा लेखकले आफ्नो बौद्धिकता र प्रचुर अभिव्यक्ति क्षमताको चमत्कार देखाएका छन् । त्यसरी नै बेलायत, नेदरल्यान्ड आदिको भ्रमणपछिका यादगारहरू पनि सशक्त देखापर्दछन् ।

गृहयुद्ध र त्यसबाट सिर्जित महाविनासमा छट्पट्टिएको मानवताको शंकालाई बुझ्न यो कृति महत्वपूर्ण छ ।

— नारायण ढकाल

आफ्नो माटो, संस्कृति, भाषा, मौलिक पहिचान र इतिहास विरासतको पक्षपाती मात्र होइन, त्यसको वकालतसमेत गर्दै आएका यी भूमिपुत्रको मातृभूमिमा यतिखेर द्वन्द्व चलिरहेको छ । बेलैमा समस्या समाधान भएन भने यसले अन्तहीन गृहयुद्धको स्वरुप ग्रहण गर्ने सम्भावना पनि उत्तिकै छ । यस्तै बेला उनले ब्रिटिश गोरखा सैनिकको हैसियतले दर्जनौ देशहरुको यात्रा र विभिन्न गृहयुद्धग्रस्त देशहरूमा शान्ति सेनाको रुपमा कार्य गर्ने अवसर प्राप्त गरेको परिणाम स्वरुप जन्मिएको हो - यो पुस्तकाकार कृति । गृहयुद्धबाट क्षतविक्षत विभिन्न राष्ट्रको अनुभवको यो संगालो पठनीय छ र पुस्तकभित्र समेटिएका विषयहरु रोचक मात्र नभएर नेपालकै द्वन्द्व व्यवस्थापनको पक्षमा समेत उपयोग गर्न सकिने स्पष्टै छ ।

आफ्नो विद्यार्थी राजनीतिको कालखण्डमा समेत सामुदायिक चिन्तन बोक्ने विश्वासदीप तिगेलाले हालको सिर्जनशील कार्यजीवनलाई पनि आफ्नो हितमा नभई सिंगो मातृभूमि र समुदायका लागि समपर्ण गरेका छन् । उनको यो समपर्ण लोभलाग्दो र अनुकरणीय छ ।

— राजकुमार दिक्पाल


ISBN 99946-30-71-7




*२०६१ - संस्करण*

*लेखकमा सुरक्षित - सर्वाधिकार*

*प्रवासी नेपाली साहित्य समाज - प्रकाशक*
*वेलायत एंव ब्रुनाईं*

*१०००।- - छपाई प्रति*

*रु. ।- - मूल्य*

*डेटिङ टिम, ब्रुनाई - लेआउट*

*ईन्द्रेणी अफसेट प्रेस - मुद्रक*

**आवरण कथाः** अफगानिस्तानका पूर्व राष्ट्रपति डा. नाजाबुल्लालाई अफगानी जनता तालीवानले १९९६ अगष्ट २७ का दिन ट्राफिक कोष्टमा भ्रूण्डाई मारेका थिए ।

ISBN:99946-30-71-7

**GRIHAYUDHAKA PIDA**

A collection of articles about my experiences:
Biswas Dip Tigela

Website: *www.biswas.com.np/creation*
*E-mail: biswas@post.com*



# समर्पण

पुजनीय,
आमा र बुबालाई ।

# एउटा बिर्सन नसकिने रात

यसपटक एउटा सौभाग्य खुल्यो । मनमा केही खुसी र उमङ्ग बोकेर ब्रुनाइबाट लन्डनको १८ घण्टे लामो हवाईयात्रा थियो । हामीबीच निदाउने प्रतियोगिता समाप्त हुनेबित्तिकै लन्डनको हेद्रो एयरपोर्टमा उत्रिएर पुनः ६ घण्टे लामो बसयात्रामा धेरै दुःखसुखका मिठा नमिठा गफ चलिरहेका थिए । कसैले जवानीका कुरा गरिरहेका थिए त कुनै साथीले पल्टने गफ छाँटिरहेका थिए ।

म ड्राइभर नजिक बसेर १८ घण्टा निदाउँदा नपुगेको निद्रा पुऱ्याउने तर्खरमा थिए तर यू.के.का रमाइला रोड र त्यसको वरिपरि देखिने सुन्दर दृश्य मेरा लागि बाधक बनिरहेको थिए । मलाई बोल्न कति पनि मन लागेको थिएन ।

एउटा साथीले प्रसङ्ग कोट्याउदै, “अँ इराक र अफगानिस्तानको युद्ध हामी गोर्खालीको लागि निक्कै खतरापूर्ण थियो तर भाग्यवश कसैलाई केही भएन ।” अर्को साथीले थप्यो, “गत साल मेसोडोनियामा पनि भयङ्कर खतरा भएको थियो नि तर दैवले जोगायो ।” साथीहरुमध्ये एकजना मात्र मेसोडोनिया गएका थिए । ऊ मेसोडोनियामा खूब खतरा भएको थियो भन्दै तर्सदै थियो तर त्यस घटनामा कोको सरिक थिए उसलाई एकिन थिएन । म निद्रा पकाउँदै थिएँ कताकता मेसोडोनिया शब्दले ध्यान आर्कषण गरेको थियो । म अझ चुप बसेर मेसोडोनियाको सार बिस्तार कथा अरूको मुखबाट सुन्न लालयित थिएँ किनकि त्यो कथाको मुख्य पात्र मै हुँ भन्ने मलाई लागेको थियो ।

साथीहरू केकस्ता खतरा थिए भन्ने सम्बन्धमा वादविवाद झैं गरी कुरा अगाडि बढाइरहेका थिए । अघिल्ला साथीले सार बिस्तार लगाइरहेको थियो । मलाई अलि बेग्लै आनन्द महसुस भइरहेको थियो । तर म चुपचाप सुनिरहेको थिएँ । घटना विवरणबीच र अन्तअन्तमा कही नमिले झै लाग्यो । म अझै



चुपचाप थिएँ । आफ्ना बारेमा गरेको प्रशंसा र चर्चाले साँच्चै बेग्लै मज्जाको अनुभव हुँदोरहेछ । म त्यस मज्जामा समाहित भइरहेको थिए । अकस्मात अघिल्ला साथीले, “ए साँच्चै विश्वास पनि त्यहाँ गएका थियौ हैन र ?” प्रश्न गरे । मैले ‘हो’ भने । अघिल्ला साथीले ती अस्पष्ट कुरा राख्नु पऱ्यो भन्ने आसयले वहाँले मलाई कुरा सार्नु भयो । अन्ततः मलाई बोल्न करै लाग्यो ।

भूपरिर्वेष्टित मेसोडोनियाका मेसोडोनियाली जातिको शोषण, अन्याय, अत्याचारको विरुद्ध मुक्तिको खातिर अल्बेनियालीका सङ्गठित मोर्चा लेवरेसन आर्मीले छापामार युद्ध लड्दै थियो । छापामारहरूले अनगिन्ती हातहतियार र केही युद्ध ट्याङ्क, हेलिकप्टर आफ्नो नियन्त्रणमा लिइसकेको थियो । मेसोडोनियन आर्मी ठूलो आतङ्कमा उत्रिए फलस्वरूप त्यहाँ मानवअधिकारको नाजुक अवस्था बन्न पुग्यो । युरोपभित्रैको यस्तो अवस्थाप्रति समग्र युरोप गम्भीर बन्यो र अन्तत मेसोडोनिया सरकार र युद्धरत छापामार अल्वेनियाली बीच वार्ता गराई छाडे तर हत्या आतङ्क रोकिने कार्य पूरा भएको थिएन । त्यसवेला बेलायती सेनाको टु पारासुट रेजिमेन्टमा एक गोरखा कम्पनी कार्यरत थियो । त्यही कम्पनीमा कार्यरत हामी नाटोको तर्फबाट इसेन्सियत हार्भेस्ट अप्रेसनअन्तर्गत मेसाडोनिया पुगेका थियौं । हामीसँग निक्कै चुनौतीपूर्ण जिम्मेवारीहरू थिए । एकदिन सँगै हिँडेका एकजना अंग्रेज साथी कोलिन इनलाई एउटा जुलुसको जत्थाले टाउकामा हिर्काएर मारिदियो । त्यसपछि हाम्रो सुरक्षा प्रक्रिया निक्कै संवेदनशील बन्यो । तेस्रो हप्तामा हामीलाई निक्कै ठूलो चुनौतीको जिम्मेवारी आयो । २ वटा हेलिकप्टरले हामीलाई निरन्तर सुरक्षा दिइरहेको थियो र हामी २ वटा चिनोक हेलिकप्पटरबाट झण्डै ३ घण्टाको हवाई यात्राबाट मिस्लोडोज्डा गाँउमा उत्रियो । हामी आआफ्ना क्षेत्रमा खटियौं । त्यो क्षेत्र सुरक्षाको हिसाबले

**एउटा गाडी सानो बत्ती बालेर मेरो नजिक आइपुग्यो । ।...उनीहरूकै भाषामा केही बोलेको मात्र थियो त्यस गाडीको पछाडि बसेका सबैले आआफ्ना राइफल तयार (कक) गरेर पर्खिंए ।**

ज्यादै संवेदनशील थियो । मेसोडोनिया र बुल्गेरियाको बोर्डरमा हामी थियौं । रातको १० वजे मेरो ड्युटी शुरु भयो । लगभग रातको एघार बज्नै लागेको थियो । त्यो सानो गाउँ अन्धकारले आतङ्कित थियो । त्यस बेला मेरो जिम्मेवारी त्यस रोडमा कुनै पनि यातायातको साधन छिर्न नदिनु थियौं । एउटा गाडी सानो बत्ती बालेर मेरो नजिक आइपुग्यो । मैले विस्तारै रोकेँ र ड्राइभरलाई ‘जट्रावो काकुस्ते’ भनेर शिष्टाचार पूरा गरें । उसले केही बोलेन, उसले गाडी स्टार्ट गर्‍यो र अगाडि बढाउन खोज्यो । मैले उसलाई भनेँ, “हामी नाटो फोर्स हौं । तपाईंले केही समय गाडी रोक्नु पर्छ ।” अङ्ग्रेजी बोल्न मन पराउँदैनथ्यो र मैले अङ्ग्रेजी बोलेको उसले घृणा गरिरहेको थियो । केही समय गाडी रोक्नु मात्र भनेको थिएँ ऊ कड्किएर बोल्यो, “दिस इज माइ कन्ट्री । आई क्यान स्टप यु, यु क्याननट् स्टप अस ।” मतलब यो मेरो देश हो म तिमीहरूलाई रोक्न सक्छु तिमीहरुले हामीलाई रोक्न सक्दैनस् भन्यो । ड्राइभरको नजिक बस्ने मान्छेले मसँग केही बोलेको थिएन । केही छिन्पछि उनीहरूकै भाषामा केही बोलेको मात्र थियो त्यस गाडीको पछाडि बसेका सबैले आआफ्ना राइफल तयार (कक) गरेर पक्डिए । मैले नम्रतापूर्वक केही समय पर्खन पुनः आग्रह गरेँ, ऊ कड्किई नै रहयो । उसले मेरो व्यक्तिगत सोधीखोजी गर्न थाल्यो । मैले भनेँ, “म नेपाली हुँ” । उसले बोल्यो, “नेपाल इज नट नाटो ह्वय यु हेयर ?” प्रश्न गर्‍यो नेपाल नाटो होइन् किन तँ यहाँ छस् ? मैले भने म ब्रिट्रिस गोरखा आर्मी हुँ, नाटो फोर्स हुँ । ऊ झनै रिसाएर गाडीबाट बाहिर मेरो सामुन्ने आएर रिस पोख्न सुरु गर्‍यो, “नाटो ह्वय वेस्ट अफ टाइम ह्यर बेटर गो ब्याक” अर्थात् नाटोले किन यहाँ समय वर्वाद गरिराखेको छ बरु फर्केको राम्रो । मैले उसलाई नियालें ऊ झण्डै ७ फिट अग्लो, डरलाग्दो मान्छे थियो । कतै हात लगाइ पो हाल्ने हो कि जस्तो लाग्यो र केही पछाडि सरेर मरो जोडी साथी शिवलाई बोलाएँ । हाम्रो झडपले अरू मेरा साथीहरु पनि ब्युँझिसकेका थिए । अझ म उनीहरूलाई सौहार्दपूर्ण सम्झाउन कोसिस गरिरहेको थिएँ । ऊ त्यति नै रिसाएर उफ्रँदै थियो । उसले भन्यो, “मेरो कर्णेल मसँग छ । ऊ छिट्टो क्याम्प पुग्नु पर्छ, हामी मेसोडोनियन आर्मी हौं । किन तिमीहरुले हामीलाई रोकेको ?” निक्कै वादविवाद हल्लाखल्ला मच्चियो । ड्राइभर नजिक बस्ने व्यक्ति नै कर्णेल थियो तर ऊ मसँग विवाद गर्न चाहेन । मलाई केही असजिलो लागेको थियो निष्पट अन्धकारमा गोली खोली हाल्ने पो हो कि भन्ने डर पनि त्यति नै लागेको थियो । यद्यपि मसँग पनि तयारी (कक गरेको) राइफल हातैमा थियो ।



मेरो साथी शिव आइपुग्यो । उसलाई पनि केही आवेग पोख्यो । ब्युँझिसकेका साथीहरु उनीहरुलाई निशाना बनाइ ठाँउ मिलाएर बसिसकेका थिए । त्यतिकैमा डिल्लीले आफ्नो समूह रोडको देब्रे र दाहिनेबाट लस्करै लिएर आइपुग्यो । उनीहरु त्यस लस्करलाई देखेपछि केही शान्त बने । झण्डै अढाई घण्टा उनीहरूलाई त्यहीं रोक्यौं । हाम्रो कर्णेल सा’बको मिटिङ छुट्यो भन्दै रिसाउँदै थिए । उनीहरू हामी झैं त्यो क्षेत्रमा पट्रोल गरेर क्याम्प फकिरहेका थिए । लामो पर्खाइपछि हाम्रो स्पेसल गाडी आइपुग्यो र उनीहरूलाई सुरक्षाका साथ उनीहरुको क्याम्प पुर्‍याइदियौं ।

खतरा मोल्नमा एउटा बेग्लै आनन्द आउँदो रहेछ भन्ने कुरा मलाई महसुस भयो । सायद त्यस परिस्थितिले अलि बेग्लै रुप लिएको भए कस्तो इतिहास लेखिन्थ्यो अन्दाज गर्नै सकिन्न । भोलिपल्ट बिहानै गाउँका बालबच्चा जम्मा भए । हामीले उनीहरूलाई चकलेट बिस्कुट बाँड्यौं । केही छिनपछि उनीहरुले पनि घरबाट ल्याएर चकलेट बिस्कुट हामीलाई बाँडे । खोई, हाइट, साइज, बानी ब्यहोरा नै त्यस्तो भएर हो कि, उनीहरुले त खुबै माया गरे । हामी गाउँ नजिकैको जङ्गलमा गाडी आउने गौंडामा थियौं । त्यहाँका स्थानीय बासिन्दाले मैले बनाएको परिकार, मेरो ममीले बनाएको परिकार, आन्टीले बनाएको परिकार भन्दै विभिन्न खानेकुराहरू ल्याइदिए । पिउने कोक, फ्यान्टा बक्सका बक्स ल्याएर थुपारी दिए, हाम्रा अरू साथीहरू आउँदा उनीहरुले नदेखून् भनेर बेस्सरी लुकायौं । हामीलाई लाग्थ्यो त्यो खानेकुरा हामीलाई मात्र गाँउलेले ल्याइदिएको छ र हाम्रा अरू साथीहरूले देखेमा हामीलाई हर्काउने छन् । त्यसैले ज्यादै सावधानीपूर्वक लुकाउँदै खायौं । केही दिनपछि मात्र मेरो साथीलाई खुसुक्क भनेको थिएँ ऊ त हाँस्यो र उसले भन्यो, “हामीले पनि त्यसरी नै लुकाउँदै खाँदै छौं ।”

त्यतिकैमा डिल्लीले आफ्नो समूह लिएर आइपुग्यो । ...त्यस लस्करलाई देखेपछि केही शान्त बने । ...सायद त्यस परिस्थितिले बेग्लै रुप लिएको भए कस्तो इतिहास लेखिन्थ्यो अन्दाज गर्नै सकिन्न ।

तब मात्र थाह भयो कि अरु हाम्रा साथीहरुले पनि हामी झैं लुकाउँदै बेस्सरी खाइरहेका रहेछन्।

एकाबिहानै ड्युटीमा एउटा गाडीलाई शोधपुछ गर्न रोकेको मात्र थिएँ । त्यो टोस रोटी बेच्ने गाडी रहेछ । ड्राइभरलाई पनि हाम्रो दुःख देखेर माया जागेछ क्यारे । ड्राइभर सरासर गाडीबाहिर निस्केर झोलाझोला टोस रोटी जब्बरजस्तो हामीलाई छोडेर गयो । मलाई त्यस बेला के अनुभव भयो भने विकसित देशको अवस्था साँच्चै नै फरक हुँदोरहेछ । हामीले ती खानेकुराहरु सबै नै इन्कार गरेका थियौं । किनकि हामीसँग पर्याप्त खानेकुरा सधैं नै हुन्छ, तर आखिर बाध्य भएर खाइदि नै पऱ्यो ।

हामी भएका ठाँउमा गाँउका धेरै व्यक्तिहरु आए त्यसमध्ये मुसाद नाम गरेका युवा अद्यावधि मेरा साथी हुन् । उनी टेटेभो कलेजमा पढ्छन् र थोरबहुत अङ्ग्रेजी बोल्छन् । उसले हामीलाई उसको घरमा सुत्न जान साह्रै ठूलो अनुरोध गऱ्यो । सायद उसले हामीलाई दुखिया देख्यो होला वा अरूनै यो त उसैको मनमा मात्र छ अथवा उसलाई मात्र थाहा छ । अथवा यसो भनौं खानबस्नको बेटुङ्गो मान्छे देख्यो होला । हामीसँग यस प्रकारका राम्रा सुत्ने खाने व्यवस्था छ भनेर देखाउन पनि मिल्दैन । आखिर त्यो दिन रिसाउँदै घर गयो । भोलिपल्ट बिहानै ऊ चिया बोकेर हामी कहाँ आइपुग्यो । हामीले गर्नु पर्ने काममा एकजना अपरिचित आएर पूरापूरी सघायो । हाम्रो काम हामी आफै गर्छौ त्यो मान्छेलाई भन्यौं तर ऊ 'यु पेतेक्त उइ' त्यसको मतलव तिमीहरूले हामीलाई सुरक्षा दिएका छौ त्यसैले म यो काम सघाउँछु भनेको रहेछ । साँच्चै नै त्यो अल्वेनियाली गाउँ थियो । मेसोडोनीयन आर्मीबाट ठूलो खतरा थियो । त्यसैले हाम्रो आगमनमा उनीहरु बेचैन खुसी थिए र सुरक्षाको अनुभूति गरिरहेका थिए । अर्कातिर सरकार र अल्वेनियालीबीचको वार्तामा देशको प्रत्येक क्षेत्र आर्मी, पुलिस, निजामती क्षेत्रमा समान अधिकार र अवसर पाउने सम्झौताको खुसियाली थियो । आखिर छापामार युद्धमा उत्रेका अलवेनियालीहरुले सरकारविरुद्ध अन्तराष्ट्रको सहयोगमा विजय गरेको अवस्था थियो ।

अन्तिम दिन बिहानै हामीले आफ्नो सरसामन मिलायौं । मुसादले उनीहरूको भाषाको गीति क्यासेट सम्झना स्वरूप ल्याइदियो । एउटी सानी बहिनी अट्टोग्राफ च्यापेर आइपुगी, हामीले सानी बहिनीलाई भनेर नाम ठेगाना र खुसीखुसी दुई चार शब्द लेखिदियौं र ती सानी बहिनी फर्किइन् । हामी सानी



बहिनी फर्केको हेर्दै थियौं । अलि पर डीलबाट एउटी तरुनी केटी निस्केर त्यो अट्टोग्राफ हेरी । त्यो अट्टोग्राफ त्यही तरुनी केटीले पठाएकी रहिछे । हामी सबै दङ्ग पऱ्यौं । त्यो ठाँउ छोड्ने बेला धेरै केटाकेटी भेला भएका थिए । सबैले एकै साथ पटकपटक वाइवाइको हात हल्लाउँदा हाम्रो मन निक्कै रोयो । अलि पर उकालीमा जिन्सको पाइन्ट लगाएकी अन्दाजी चौधपन्ध्र बर्षकी बहिनीले एकएक गरेर सबैसँग हात मिलाउदै 'थ्याङ यु' भनेर एकएक वटा चकलेट हामी सबैलाई दिइन् र वाइवाइको हात हल्लाइन् । हामीसँग सिर्फ डाँढमा बर्गन पोचेस र हातमा राइफल अनि गह्रौं मन थियो । करिमकरिम उकालीमा शरीर बिस्तारै भिज्दै थियो । उनको त्यो उपहार स्वरुप चकलेटको बदला केही त दिऊँ झैं लागेको थियो तर त्यो अप्रत्याशित थियो र हामीसँग थाकेको शरीर, निश्चित समयभित्र पुग्नु पर्ने बाध्यताको बोझबाहेक केही थिएन् । त्यसैले त्यही 'थ्याङक्यु' शब्द सौगात दियौं । आफ्नै गाँउमा नपाएको मायाममता मेसोडोनियाको मिस्लोडोज्डामा पाउँदा साँच्चै नै हामीलाई मान्छेमा हुने भावनाको मिठो पाठ सिकाएको छ । राम्रा ठाँउमा राम्रै मान्छे हुँदा रहेछन् अर्थात् राम्रा मान्छेका राम्रै गाउँ हुँदा रहेछन् । अझ भनौं त्यस गाउँको सुन्दरता अनि मान्छेहरुको रङरूप, धरोधर्म तपाईंको कसम खाएर पक्षपात नगरी भन्नु पर्दा त्यति रमाइलो पहाडी गाउँ अझसम्म मैले देखेको छैन् । त्यति विध्न मिलनसार गाउँ समाज मैले कतै भेटेकै छैन् । भनिन्छ जिन्दगी एउटा यात्रा हो । साँच्चै नै मेरो निम्ति यो पहिलो र अन्तिम सुन्दर गाउँ र सुन्दर समाजको यात्रा थियो । उनीहरुको सत्कार र सहयोगका लागि धन्यवाद, मुरीमुरी धन्यवाद ।

*१२ मार्च २००४, यु.के.*

# फिजीको पागलखाना र मेरो पागलपना

भर्खरै 'नादी' एयरपोर्टमा उत्रिएर एउटी सुन्दरीसँगै जिस्कँदै थिएँ । सायद, त्यो नै मेरो हिन्दी भाषाको पहिलो जिस्काइ थियो । एकैछिन्मा मनले जितेकी पार्वतीलाई  जानेको जति हिन्दी एकैसाथमा भनेर सिध्याएँ अन्तमा उनी प्रतिक्रियाझैं हाँसिदिइन् । हुनत जिन्दगी नै एउटा भ्रम हो, तै पनि जिन्दगी लामो छ, उतारचढाव धेरै व्यहोर्नु पर्छ । कहिले स्वाधीन कहिले पराधीन । अघिल्लो दिन दक्षिण पूर्वी एसिया ब्रुनाइबाट अस्ट्रेलियाको ड्राविन हुँदै दक्षिणी गोलार्द्धको गणतन्त्रात्मक राष्ट्र फिजीमा विमान अवतरण हुनुभन्दा केही अघि मेरो जन्मभूमि देशकाझैं मिल्ने भौगोलिक बनावट डाँडा, खोल्सा देखिने बित्तिकै मेरो प्रिय बनिसकेको थियो, फिजी देश । त्यस दिन फेरि भेट्ने बाचाको हात हल्लाउँदै पार्वतीसँग विदा भएर लोटोका सहर पुगें । केही दिनको उठबसपछि मात्र पत्यार भयो, जिउडाल, रङ्गले जति ठूला, जति काला देखिए पनि आदिवासी फिजियनहरू आदिवासी त्यति नै फर्साइला हुँदारहेछन् । उनीहरू जति सुखसँग बसेजस्ता देखिन्थे उनीहरू त्यति नै देशको राजनैतिक, आर्थिक, सामाजिक एमव् सांस्कृतिक शोषणप्रति दुखेका रहेछन् । सहरका आवासहरू छताछुल्ल झण्डै काठमाडौंमा जस्तै पट्यारलाग्दो देखिन्थे । यथास्थितिवादी अर्थात् कृषि प्रणालीले फड्को मार्न कुनै कोसिस नगरेझैं लाग्थ्यो । नेपालको हुर्कने बेलाको असारे मकैभन्दा घना देखिने यहाँको नगदेबाली आखिर उखु मात्र हो । गजब रहेछ त्यहाँ ! गाई, बाखा हराउने गोठालो हराउनु पर्दा त्यहीं उखुबारी । बाटो बिराएर हराउनु पर्दा त्यहीं



उखुबारी अनि यौवन हराउनु पर्दा पनि त्यहीं । अझ त्यो सहरलाई चिनीको सहर Sugar City नामले चिनिदो रहेछ । त्यसरी उखु खेतीभित्र हराउँदा हराउँदै केही दिन बितेको पत्तै भएन ।

तीन सयभन्दा बढी टापुमध्ये झण्डै २३० टापुमा बसोबास भएको फिजीमा विशेषगरी Vitelue टापुमा विशेष बस्ती पाइन्छ । ती दुईवटा टापु नै सबैभन्दा ठूला टापु हुन् । उमेरले नै मानिसलाई धेरै कुरा गराउँछ, सिकाउँछ । भावनासँग परिचय गाँस्दै गर्दा विश्वास नै नलाग्ने गरी फाट्टफुट्ट सुन्ने गरेको नेपाली भिलेज(गाउँ)तर्फ मेरो मन खिचियो र लगत्तै त्यसतर्फ लागें । सिगातोमा नदीको किनारमा अवस्थित सिगातोका सहरबाट झण्डै ३० कि.मि. पूर्व पहाडको फेदीतर्फ पछ्याउँदै बाटो लागें । केही बेरमा ट्याक्सी आँगननेर रोकियो । बाजे विक्रम सिंह, बहिनी आर्तिका र भाउजूद्वयसँग स्वयम् नेपाली भएको परिचय दिएँ । उहाँहरूले अत्यन्तै सत्कार गर्नु भयो । पहिले आफ्नो बुबा बाजेले बोलेका केही शब्द सम्झँदै नेपाली भाषामा शिष्टाचारका कुराहरू बाजे विक्रम सिंहले गर्नुभयो । त्यसपछि मलाई फिजीमा गोर्खा भिलेज भएको पक्का भयो । बाजे विक्रम सिंहका अनुसार सन् १८७० को दशकमा उखु खेती गर्न भारतीय मूलकासँग मिसिएरनेपाली पनि  फिजी आएका थिए रे । वर्तमानमा त्यस गाउँमा झण्डै ६० घर जति नेपाली  बसोबास गर्दा रहेछन् । कुलकुटुम्ब भारतीय मूलकासँग चल्ने भएकाले उनीहरू हिन्दी बोल्दा रहेछन् । नेपाली एकाध बूढापाकाबाहेक अरु नबोल्ने रहेछन् । फिजीमा नेपालीहरूको जीवनस्तर उच्च देखियो र उनीहरू धार्मिक, सांस्कृतिक क्षेत्रमा पनि अत्यन्तै सहिष्णु रहेछन् । भर्खरै मात्र तख्तापलट भएको फिजीमा त्यहाँका आदिवासी र ४५ प्रतिशत भारतीय मूलका व्यक्तिहरूबीच द्वन्द पहिलेदेखि चल्दै आएको थियो । तर फिजीयन आदिवासी र

**गजब रहेछ त्यहाँ ! गाई, बाखा हराउने गोठालो हराउनु पर्दा त्यहीं उखुबारी । बाटो बिराएर हराउनु पर्दा त्यहीं उखुबारी अनि यौवन हराउनु पर्दा पनि त्यहीं । अझ त्यो सहर त चिनीको सरहको रूपमा पो चिनिदो रहेछ ..**

नेपालीहरूबीच त्यो द्वन्द छैन । भनौं, त्यहाँ नेपाली सभ्य र सम्पन्न भएर बसेका रहेछन् । गोर्खा भिलेज घुमेर जुन अनुभव गरें, अनुभूति बटुलें त्यो नै मेरो फिजी भ्रमणको ठूलो खुसी र प्राप्ति थियो । त्यसको केही दिनपश्चात पुनः मलाई घुम्ने अभिलाषा जाग्यो । त्यसपछि त्यस टापुलाई नै चक्कर लाउने रहरले राजधानी सुभातर्फ मोडिएँ ।

पहिलो दिन म कारबाट सहर सरसर्ती घुमें । त्यहाँका पार्लियामेन्ट (जहाँ प्रधानमन्त्री महेन्द्र चौधरीलाई ५६ दिन बन्दी बनाइएको थियो) पुगें । त्यसपछि म्युजियम हुँदै, त्यो दिन फिजीको पागलखाना घुम्न पुगें । पागलखाना सुभा सहरभन्दामाथि डाँडामा अवस्थित छ । त्यस पागलखानामा पुरुष र महिलाको बेग्लाबेग्लै विभाग रहेछ । पुरुष क्षेत्रमा सोको सरले वर्णन गर्दै घुमाइदिनुभयो । त्यहाँ एकजना प्रतिष्ठित पत्रकार, एकजना विज्ञान र गणितमा डाक्टर गरेको इन्डियन मूलका र अर्को एकजना राजनीतिज्ञ कोठाभित्र थुनिएका थिए । पागल पत्रकार हामीलाई देखेर ओछ्यानबाट उठ्यो र झ्यालसम्म आएर पिट्न झम्टियो । हामी शान्त भएर अर्कोतर्फ लाग्यौं ।

त्यहाँ असङ्ख्य पागलहरू थिए, कोही निको भएर परिवारसँग घर फर्कंदै थिए भने ती डाक्टर, पत्रकार र राजनीतिज्ञ भने तीन दिनअघि मात्र पागलखानामा राखिएको रहेछ । अन्दाजी ६५ वर्षका ४ जना वृद्धाहरू एकै कोठामा थिए । उनीहरू धेरै समयसम्म पागल रहनेमध्येका थिए । कोठामा गएर खोक्दा ती सबै खोक्थे, सुसेली गर्दा उनीहरू पनि त्यस्तै गरी सुसेल्थे । हामीले रोएको अभिनय गर्दा उनीहरू पनि रुन्थे । मानौं कि उनीहरू सानो नानी या पिँजडाका सुगाझैं थिए । त्यो पुरुष विभाग घुमिसकेपछि मेरा मनमा धेरै प्रश्न प्रतिप्रश्न जन्मिए । आखिर सज्जन मान्छे नै त पागल हुने हो भन्दै दुखेको मनलाई बुझाउने कोसिस गरें तर कहाँ मन बुझ्यो र ? एउटा कथाझैं लाग्ने दृश्य प्रत्यक्ष आँखाले देख्न पाउँदा । मेरो मन धेरै रोइसकेको थियो र मनले योजना बनाउँदै थियो, त्यही बसौं, सेवा गरौं । तर, समय निक्कै बितिसकेको भए पनि फेरि मलाई महिला विभाग घुम्ने रहर जाग्यो । त्यसका लागि अर्कै ठाउँमा अनुमति लिनुपर्ने रहेछ, त्यहाँ पुगें । म्याडम लवसाले मलाई वर्णन गर्दै घुमाउन लैजानु भयो । एउटा कोठामा आठजना वृद्धा महिला थिए, तीमध्ये एकजना चाइनिज, तीनजना इन्डियन र चारजना फिजीका आदिबासी रहेछन् । ती सबै ५५ वर्ष नाघेको वृद्धा महिला थिए । अर्काथरी आइमाईहरू कतिपय त भर्खरका थिए । साडी, कुर्ता फुकालेर



आफैले लगाएका लुगा च्यात्दै, रिसाउँदै, उफ्रिँदै थिए । उनीहरूले त्यसो गरेर हामी सज्जन हौं भन्ने हाम्रो भ्रमको पर्दा च्यातिरहेका थिए र सभ्यतालाई जिस्काइरहेका थिए । हो, हाम्रो सभ्याता जो हामी गौरव गर्छौं त्यसले उनीहरूलाई तारबार लगाएर थुनिरहेको थियो, त्यसलाई धुजाधुजा बनाएर उनीहरूले च्यातिरहेका थिए र भनिरहेका थिए कि यतिखेर हामी नाङ्गिरहेका छैनौं बरु तिमीहरू नाङ्गिरहेका छौं र हामी तिम्रो तथाकथित सज्जनपनलाई धुजाधुजा बनाएर च्यातिरहेका छौं । तर जे गरे पनि जे भने पनि ती विचराहरू भित्र थिए, फालामे चिसो तारबारभित्र थिए, तारबारभित्रपट्टिबाट झुण्डिरहेका थिए । उनीहरू बाहिर आउन नसक्ने गरी गेट लगाइएको थियो र त्यहाँ फलाम दुई मानव आत्माबीचको न्यानोपनलाई चिस्याएको चिस्याएकै थियो । यस्तो लाग्थ्यो, अब ती न्याना मानवताहरू कहिल्यै भेट हुँदैनन् । तर त्यहाँ एउटा यथार्थता थियो त्यो के भने त्यो जड चिसाको प्रत्यारोपक अरु कोही नभएर मानव आफैं थियो । म्याडमका अनुसार त्यहाँ जो पागल छन् कतिपय आफन्तहरूले नै लिएर आएका हुन् । अफसोचको कुरा त्यहाँ कोही आफन्तहरू ती पागल विरामीहरूलाई हेर्न कहिल्यै आउँदैनन् । पागल भनिएकाहरूका छोरा छन्, छारी छन् तर पागल आमालाई अर्थात बुबालाई हेर्न छोराछोरी कहिल्यै आउँदैनन् । म्याडमले यो हृदयविदारक तर कटु सत्य मलाई सुनाउँदै साह्रै नमिठो मान्दै गुनासो गर्नुभयो । उहाँलाई सम्झाउने मसँग त्यस्तो कुनै जादुमय कुरा थिएन । तर, पनि मैले स्वतस्फूर्त रुपमा उहाँलाई भने तपाईहरू भगवान् हुनुहुन्छ अनि जो यहाँ भएका पागलहरू हामी जस्तै मानिस हुन् । तपाईंहरूले उनीहरूलाई जीवन दिनुभएको छ । तपाई महान् हुनुहुन्छ, तपाईंका स्टाफ साथीहरू महान् छन् ।

तत्काल सशस्त्र क्रान्तिबाट सत्ता तख्तापलट गर्न

**अफसोच.. आफन्तहरू ती पागल विरामीहरूलाई हेर्न कहिल्यै आउँदैनन् । पागल भनिएकाहरूका छोरा छन्, छारी छन् तर पागल आमालाई अर्थात् बुबालाई हेर्न छोराछोरी कहिल्यै आउँदैनन् ।**

सफल नेता जर्ज स्पिटले देशविदेशको राजनीतिमा नै चुनौती थपिदिए । अन्ततः उनी पक्राउ परे पनि फिजीको भूमि फिजीका आदिवासीहरूले स्पिटलाई अवतार सम्फे फरक नपर्ला । यतिखेर फेरि मलाई नेपालको याद आयो, हाम्रा जनजाति नेताहरूको सम्फना एकएक गरी अगाडि आयो । तर हाम्रा नेताहरू स्पिटको छेउमा कहीँ पनि राख्न लायक थिएनन्, हाम्रा नेता भनाउँदाहरू कोही विदेश सयरको चक्करदारहरू, कोही दरवार परिक्रमा गर्ने गणेशहरू त कोही राजनैतिक पार्टीका धोतीका जुम्म्रा जस्ता मात्र थिए । सगरमाथाको देशको नेता जस्ता नभएर मेन्दाहीमा भारी विसाउने र मच्ची(खुर्सानी) फटारो हान्ने कदका मात्र छन् हाम्रा नेताहरू । यतिखेर मलाई आफू र आफ्ना नेता भनउँदाहरूप्रति हीनतावोध भइरहेको थियो अनि नजानिदो पारामा मेरो भित्री आत्माले आदिवासी जनजातिका नेता स्पिटलाई सलाम गर्न मन लागिरहेको थियो । यतिखेर नै नेपालसँग विविध क्षेत्रमा एकरूपता भएको देश फिजीबाट र त्यहाँको क्रान्ति र परिवर्तनबाट हामी नेपालीले धेरै कुरा सिक्न सक्छौं भन्ने कुरा पनि याद आयो । के यो व्यावहारिक कुरा हुन सक्ला ?

पागलखानाको दुवै विभागअन्तर्गत जम्मा ४४ जना पागल थिए । पुरुषतर्फ १८ र महिलातर्फ २६ जना । यसरी त्यहाँको तथ्याङ्कले महिला बढी पागल भएको देखाएको थियो । सरकारी न्यूनतम तलवमा पनि सेवाका भावले प्रेरित भएर काम गर्ने त्यहाँका कर्मचारी म्याडम लवसा र सर सोकोप्रति कृतज्ञता मेरो सदा सदालाई...जसले मानव हुँ भन्नेहरूले तिरस्कार गरेका साच्चिका मानवहरूलाई उहाँहरुले चिन्नुभएको छ र सोही अनुरुप व्यवहार गर्नुभएको छ ।

(तान्छोप्पा वर्ष ९, अङ्क ६, १० असार २०६१ मा प्रकाशित)

*- ब्रुनाइ एयरलायन्समा ब्रुनाइबाट बेलायत प्रस्थान गर्दागर्दै,*
*१५ डिसेम्बर २०००*



# इराक युद्धमा मेरो संलग्नता र पश्चात्ताप

केही समयअघिको कुरा हो । इराकमाथि अमेरिकी हमलाको तम्तयारी भइरहेको थियो । सायद रङ र क्षेत्रको पनि निक्कै ठूलो असर हँदोरहेछ क्यारे, हामी एसिया महादेशका भएकाले कसैले तेस्रो विकसित मुलुक मात्र भनिदिँदा पनि मन दुख्दो रहेछ । खोई, यथार्थ कुराले पोलेको पो हो कि । सद्धाम हुसेन जसको वाल्य शिक्षा त्यति राम्रो थिएन । हुर्के बढेपछि मात्र पढेलेखेको उच्च सर्टिफिकेट लिने ब्यक्ति अनि होनहार कम्यिुनिस्ट नेताको हत्या गरेको ब्यक्तित्व अनि बाथ पार्टीमा लागेर २२ बर्ष इराकको राष्ट्रपति बनेका राजनीतिज्ञ जस्ले कुर्दिस्ट, सुन्निलाई दुई दशकभन्दा बढी दबाउँदा ती शोषित समुदायको छटपटी कस्तो भयो होला भन्ने जस्ता कुरालाई टाढै राखेर हामी एसियाकै पक्षमा, सद्धामकै पक्षमा सोच्ने गर्थ्यौं । नुन पानी बेलायतको खाए पनि आखिर त्यही पैसामा हाम्रो आत्मा बेच्न नसकिन्दो रहेछ क्यारे, सधै युरोपकै पक्षमा काम गरे पनि भुकाव र सहमति आफ्नै देश र महादेशको पक्षमा हुन्छ । अभ कहिलेकाहीँ यस्तो सञ्जोग पर्न जान्छ, स्पानीस बोल्नेको अगाडि अङ्ग्रेजी हाम्रो हो भनी माया गर्छौं, अङ्ग्रेजी बोल्नेको अगाडि हिन्दी हाम्रो हो भनी माया गर्छौं, हिन्दी बोल्नेको अगाडि खस-नेपाली भाषा हाम्रो हो, राम्रो हो भनेर माया गर्छौं । अभ नेपाली बोल्नेको अगाडि मेरो मातृभाषाको बढी माया लाग्छ र म त्यसमा गर्व गर्छु । यो बडो अचम्म छ । हुन त हामीले सबै भाषा क्षेत्रलाई बराबर माया र सम्मान गर्नुपर्छ तै पनि घरको भूत देशको देवता भन्ने उखान फैं भएको हुनुपर्छ ।

अमेरिका र इराकका बीच युद्ध सुरु हुनै लागेको थियो । त्यस बेला हामीमा द्विविधा थियो । कारण हामीले लड्नु पर्ने, मर्नु पर्ने सद्धामका विरुद्धमा तर हाम्रो भित्री मन चाहिँ थियो इराकले नै यी पश्चिमा शक्तिलाई खतम पारोस् भन्ने । एउटा अनौठो

...स्पानीस बोल्नेको अगाडि अङ्ग्रेजी हाम्रो हो .. अङ्ग्रेजी बोल्नेको अगाडि हिन्दी हाम्रो हो ... हिन्दी बोल्नेको अगाडि खस-नेपाली भाषा हाम्रो हो.. अझ नेपाली बोल्नेको अगाडि मेरो मातृभाषाको बढी माया लाग्छ र म त्यसमा गर्व गर्छु ।

र असहज परिस्थिति हामीमा थियो । नुनको सोझो अमेरिका र बेलायतको पक्षमा लडिरहेका छौ तर हाम्रो एसियन स्वाभिमान त्यति सजिलै बेच्न सकेनौं र सक्दैनौं । हामीमा यो द्वन्द्वरत विचारको गरुङ्गो मस्तिक बोकेर कर्तब्य पक्षमा लुरुलुरु लाग्नुबाहेक अर्को विकल्प पनि त थिएन । साँच्चै भन्नु पर्दा यो लाचारी विवशताले हाम्रो शिर ठाडो थिएन, आत्मा खुलेको थिएन, हुन त चाहेको सबै कहाँ पो भएको छ र ?

बेलायतमा अमेरिकन आर्मी छ र त्यति विघ्न छ भन्ने मलाई पटक्कै थाहा थिएन । अमेरिकाले पूर्व तयारी गरिरहेकै बेला हामीलाई पनि पूर्वसूचना आयो र हामी सबै तम्तयारीमा जुट्यौं । तर अकास्मात झण्डै आधा जति हाम्रा मान्छे सियरालियोन पुगे । अमेरिकी राष्ट्रपति जर्ज डब्लु बुसले इराकी जनताको स्वतन्त्रताको लागि भन्ने वाहानामा इराकका शासक सद्धाम हुसेन र उनका छोरा द्वय उदय र कुसयलाई ४८ घण्टाभित्र इराक छोड्ने अल्टिमेटम दिनुभन्दा दुई दिनअघि हामी वेलायतको पश्चिम दक्षिण पर्ने फेयरफोर्ट नामक एयरपोर्टमा त्यहाँको सुरक्षार्थ पुगेका थियौं । त्यहाँ हजारौ अमेरिकी सेना थिए र त्यो नै बेलायतमा रहेको सबैभन्दा ठूलो अमेरिकी क्याम्प थियो । सयौंको सङ्ख्यामा रहेको हाम्रो समूहले त्यस एयरफिल्डलाई सुरक्षा दिन सुरु गर्‍यौं । सँगैका मेरा केही साथीहरु फस्ट रोयल आइरिस बटालियनमा समाहित भएर एक गोरखाली कम्पनी कुवेतबाट इराक छिर्न तम्तयार भइसकेका थिए । त्यसैले हामी प्रत्येक घण्टाको टी.भी. न्युज हेरिरहेका हुन्थ्यौं ।


इराक युद्धमा अमेरिका सम्बद्ध सेनालाई विजयी बनाउन सफल बी फिफ्टीटु विमान इराकमा मार गरी फर्केपछि अवतरण गर्दै

यसपटकको युद्धमा मैले अत्यन्तै महत्वपूर्ण युद्ध मोर्चामा संलग्न हुनुपर्ने बाध्यता छदै थियो । इराक युद्ध जित्ने सबैभन्दा ठूलो शक्तिलाई सुरक्षित राख्ने जिम्मेवारी थियो, हामीमा । झण्डै तीन



हप्ताको हाराहारीमा चलेको युद्धको पूरा अवधिभर रातदिन हामी बमबर्षक बी फिफ्टी टुको सुरक्षार्थ खटेका थियौं । प्रायः २४ वटा बी फिफ्टी टु विमान रहने यस फेयरफोर्टमा सिभिल पुलिस बाहिर र भित्र हामी गोरखा आर्मी अनि केही हेलिकप्टरहरुले सुरक्षा दिने काम सुचारु रुपले चलिरहेको हुन्थ्यो । कहिलेकाहीँ उक्त विमानमा बम भर्न हामी गोर्खालीले पनि काम गर्नुपर्थ्यो । खोई, के गर्ने र हामीले सुरक्षा दिएर राखेको बी फिफ्टी टु विमानले बम लगेर खसालेको वम तिनै निर्दोष इराकी जनतामाझ झर्नेछ भन्ने हामीलाई थाहा थियो । हामीले महापाप गर्न सहयोग गरिरहेका छौं भनेर आफूलाई अपराधी महसुस गरिराखेका हुन्थ्यौं तर खोई के गर्ने त्यो एउटा बाध्यता थियो । हामी आपसमा छलफल गर्थ्यौं, कुरा गर्थ्यौं सक्ने भए म इराकी जनतालाई बी फिफ्टी टु आउँदैछ भाग्नु जोगिनु भनेर होसियारीको सूचना दिने थिएँ तर खोई सम्भव कहींबाट थिएन । अवको केही समयमा ४ बटा कहिले २ वटा बी फिफ्टी टु जादैछन् भन्ने सूचना आउँथ्यो तव हामीबीच कुरा चल्थ्यो, लौ आज कुनकुन निर्दोषको मुत्यु लेखेको छ होला नि । ब्ल्याक हक हेलिकप्टर उडेर जहाजको रनवे र वरिपरिको बाटो र ठाउँ पूर्ण सुरक्षित छ भन्ने पक्कापक्की गर्ने बित्तिकै बी फिफ्टी टु विमान उडेर जान्थ्यो । हामीलाई जानकारी भएअनुसार अर्को एक ठाउँ बी फिफ्टी टुको रिजर्भ एयरपोर्ट बाहेक पूरापूरी इराक युद्धको निम्ति सञ्चालित बी फिफ्टी टु विमानको सञ्चालित स्थान त्यही वेलायतको फेयरपोर्ट जहाँ हामीले सुरक्षा दिइरहेको स्थान मात्र हो । विमान जमिनमा अवतरण हुँदा पारासुटको प्रयोग गर्ने र उड्दा छोटो दुरी मै जमिन छोड्ने भएकोले त्यो दृष्य हेरेर केही रमाइलो लाग्ने र उडेको ठिक ४ घण्टापछाडि टी.भी.मा प्रत्यक्ष बगदादको ठाउँठाउँमा बमवर्षा भएको हेर्नु पर्दा दुःख लाग्थ्यो किनकि निर्दोष मानिस मरिरहेका हुन्थे, अत्यन्तै सामरिक भवन भत्काउनुमा कस्को पो मन खुसी रहन्छ । मेसोपोटामियाको सभ्यता बोकेको इराकको त्यो स्थिति देख्नुमा ती ठूला आतङ्ककारी बाहेक कसैको मनमा प्रसन्नता ल्याएन ।

युद्ध घन्किएको थियो । कुवेतबाट इराकमा हजारौं सैन्य शक्ति भित्रिरहेको थियो । राष्ट्रपति सद्दाम हुसेन र उपप्रधानमन्त्री तारिक अजिज इराकले चाँडै युद्ध जित्ने घोषणा गरिरहेका थिए । एक दिनको कुरा हो तारिक अजिज जनता माझ आएर अमेरिकन सेना वगदादमा प्रवेश नगरेको भाषण गर्दै थिए तर उसकै नजिक गोलाबारुद पड्किएको टी.भी.मा देख्न पाउँदा हामीलाई बढो अनौठो लाग्यो । माथिल्लो निकायबाट युद्ध कसरी गरिँदोरहेछ भन्ने थोरबहुत हामीले देख्न पायौं ।

अमेरिका, बेलायत, अस्ट्रेलिया, स्पेन मिलेर २००३ को मार्च २० देखि सुरु भएको युद्धमा चारै तिरबाट हामीले पनि कुनबेला, कतिखेर इराकले रासायनिक हतियार प्रयोग गर्ला भनेर उत्सुक भएर टी.भी.मा हेरिरहयौं तर त्यो भएन । संयुक्त राष्ट्र संघ



*युद्धको शिकार हुन पुगेकी एक निर्दोस बालिकाको विभत्स शव*

सुरक्षा परिषदका ५ स्थायी सदस्य राष्ट्रमध्ये ३ रसिया, चीन र फ्रान्सको विरोध हुँदाहुँदै पनि २ स्थायी राष्ट्र अमेरिका र बेलायतले आक्रमण सुरु गरेपछि त्यसको संसारभर विरोध गरियो । स्वयम् बेलायतमा पनि युद्धका विरुद्धमा ठूलो आवाज उठ्यो, जुलुस भए तर त्यसको कुनै वास्ता भएन । सायद शक्तिको अगाडि कसैको केही लाग्दैन भनेको त्यही थियो । अकस्मात एक व्यक्ति (जो वेल्स भाषा मात्र बोल्ने) बाहिरका वार फेन्स काटेर एयरपोर्टभित्र छिरेर बी फिफटी टु विमानतर्फ दौडिरहेको वेला मेरा साथी लामाको समूहले पक्रियो । तत्काले त्यो कुरा अमेरिकन कमान्डरलाई जानकारी हुने बित्तिकै लामालाई एउटा अमेरिकन मेडल दिइएको थियो ।

**युद्धपछि ९ एप्रिल २००३ मा सद्दामको शासन अन्त्य भएको घोषणा र १ मई २००३ का दिन राष्ट्रपति जर्ज डब्लु बुसले इराक युद्ध अन्त्य भएको घोषणा गरे ।**

हमला सुरु भएदेखि नै अमेरिकी गठबन्धन सेनाले इराकउपर विजय लिँदै थियो जुन कुरा बी.बी.सी. टी.भी.ले पूर्ण रुपमा प्रसारण गर्दै थियो । हमला सुरु भएको तेस्रो दिनमा ब्रिटिस सेनाले बास्रामा निक्कै ठूलो मार खानु पर्‍यो जुन दिनदेखि बी.बी.सी. टी.भी.ले पूर्ण विवरण नदिई फाल्टो प्रोगामहरु देखाउन थाल्यो र २ दिनपछि पुनः विवरण दिन थाल्यो ।

युद्धले २ हप्ता पूरा गरेर तेस्रो हप्ता लागेको बेला फेयर फोर्ट एयरपोर्टमा बी फिफ्टी टु विमानको बम जर्मनबाट ल्याइयो र त्यसवेला एउटा वा दुईवटा मात्र विमान इराक पठाउन थालियो । हजारौ माइल उड्ने क्षमता भएको बी फिफ्टी टुको बेलायत नै एउटा यस्तो महत्वपूर्ण स्थान बन्यो जसले गर्दा इराक विरुद्धको युद्धमा विजय हासिल गर्‍यो ।



*यी वालकले अमेरिकाको के विगार गरेको थियो त ? यसको उत्तर अझै मिलेको छैन ।*

अप्रेसन इराक फ्रिडममा



करिव २ लाख अमेरिकन सेना र २० हजार ब्रिटिस सेनाका आक्रमण सद्दामप्रति वफादार इराकी रिपब्लिकन गार्डले सामना गरेका थिए । उक्त युद्धमा ३ हजार इराकी सेना मारिएका थिए भने १०१ अमेरिकन सेना र ३० ब्रिटिस सेना मारिएको थिए । भिषण युद्धपछि ९ एप्रिल २००३ मा सद्दामको शासन अन्त्य भएको घोषणा र १ मई २००३ का दिन राष्ट्रपति जर्ज डब्लु बुसले इराक युद्ध अन्त्य भएको घोषणा गरे । सद्दामको पतन भएको १२ दिनपछि भूतपूर्व अमेरिकी सेनाका जनरल जे गार्नरलाई २९ एप्रिलमा इराकको आन्तरिम मुख्य प्रशासक नियुक्त गरिएको थियो । पछिबाट ब्रेइमर नियुक्त गरिए । ३० जुन २००४ मा सम्पूर्ण सार्वभौम ईराकी जनतालाई नै सुम्पने कार्यक्रम भए पनि त्यसको २ दिन अगाडि नै इराकी नेसनल काङ्ग्रेसका नेता अहमद चलाबीलाई सुम्पेर ब्रेइमर अमेरिका फर्किसकेका छन् ।

साम्राज्यवादी अमेरिकासामु आत्मसमर्पण नगर्ने इराकका तानाशाह लौह पुरुष सद्दामलाई आखिर १३ डिसेम्वर २००३ का दिन टिक्रिटभन्दा झण्डै ९० कि.मि. दक्षिणको अवजा गाउँमा ६ फिट गहिरो १० फिट चौडा भएको एउटा माकुरे गुफामा फेला पारेका थिए । त्यस वेला सद्दामसँग २ वटा राइफल, १ पेस्तोल र ६ लाख ५० हजार डलर साथमा थियो ।

अमेरिका र बेलायतले आम विनाशको हतियार राखेको छ भन्ने अरोपमा छेडिएको युद्ध समाप्तिपछि पनि कुनै आमविनाशको हतियार फेला परेको छैन । यसरी सरसर्ती हेर्दा इराक युद्धलाई थोरबहुत तेलको राजनीति, थोरबहुत धार्मिक युद्ध पनि भन्न सकिन्छ र थोरबहुत बुस परिवारको रिस साध्ने युद्ध पनि भन्न सकिन्छ ।

एक शासकको कारण सञ्चालित युद्धले आजसम्म देशलाई वर्वाद त बनायो नै अरु भोलि गएर पनि इराकको भविष्य अस्पष्ट र धुमिल देखिन्छ । खोई के भनौ इराकी जनताको दुर्भाग्य वा गल्ति, त्यही दिन, त्यही क्षण याद आइराख्छ झलझली । नुनको सोझो गर्दा जे जति मतियार बन्नु पर्‍यो आज पनि मलाई पश्चात्ताप लागिरहेको छ । म मेरो महादेशलाई माया गर्छु । जानीनजानी गरेको भूल, गल्तीप्रति सबैसँग माफी चाहन्छु । भविष्यमा त्यो विवशता नआओस् भन्ने कामना गर्दछु । इराकी जनताको सुख र समृद्धिको कामना गर्दछु ।

*४ जुलाइ २००४, ब्रुनाइ*

# अफगानिस्तान भ्रमण, आतङ्कवादको यथार्थता र मेरो अनुभूति

हिजोसम्म धूमधाम हिउँ परेको राजधानी काबुलमा कुन्नि कसरी आज न्यानो घाम लागेको छ । म हिमालको फेदमा बसेर केही दृश्य अवलोकन गरिरहेको छु । मरो मन पनि बिछट्टै रमाएको छ, मेरो तनको चङ्गापनसँगै । केही दिनअघि धूलैधूलाको सहर काबुल र आसपासमा रहेको अग्ला मनोरम पहाडहरू हिउँ पर्नाले मेरो देशको मकालु, कुम्भकर्ण र कञ्चनजङ्घा जस्तै हिमालमा परिणत भएका छन् । आकाश असाध्यै सफा खुलेको छ । मेरा आँखाले भग्नावशेष मात्र रहेको काबुल सहरलाई क्रमशः छिचोल्दै जान्छ, जति पढ्यो काबुललाई पढन त्यति नै कुतुहलता बाँकी रहन्छ । स्थानीय व्यक्तिहरुसँग कतै अङ्ग्रेजी त कतै उर्दू र कतै हिन्दीमा कुरा गर्दा उनीहरुको पीडा र वेदना मलाई पनि सेयर गर्छन् र मेरा भावनाहरु पनि उनीहरूसँगै दुख्ने गर्छ, सायद मेरो आगमन बित्दो नबित्दो दुई हप्ता हुनाले उनीहरुको मनले मलाई जितेको हुनुपर्छ ।

केही महिनाअघि मेसोडोनियामा चर्किएको समस्याको बावजुद नाटोको तर्फबाट म त्यहाँ पुगेको थिएँ । मेसोडोनियाबाट बेलायत फर्कन केही समय मात्र बाँकी थियो । अकस्मात सेप्टम्बर ११ का दिन अमेरिकाको विश्व व्यापार केन्द्र हेर्दाहेर्दै ध्वस्त हुन पुग्यो । हामीले आपसमा धेरै अडकलबाजी काट्यौं, अन्तत बेलायत फर्कियौं र क्रिसमसको छुट्टिमा स्वदेश जाने चाँजोपाजो मिलाउदै थियौं । भोलि उड्नु पर्ने भएकोले प्रायः किनमेल सकिएको थियो भने कोही अवेरसम्म कोल्चेन्टर सहरमै किनमेल गर्दै थिए तर अचानक अफगानिस्तान जानु पर्ने सावधानीको सूचना आयो । आखिर जागिर हो जागिरको सोझो गर्नै पर्छ । घर परिवार भेट्ने व्यग्र चाहना एकाएक वेदनामा रुपान्तरित भयो । कताकता मन बेस्सरी दुख्यो, दुखेको मनलाई सम्हाल्दै हामी सबै अफगानिस्तान प्रस्थानका लागि तयारी गर्न थाल्यौं । हतारहतार नेपालमा घरपरिवारलाई फोन गर्‍यौं, सबै बेखुशी भए । बेखुशी भएर के लाग्थ्यो र ! हामीले त जानै पर्थ्यो । सायद यही कुरा बुझेर होला परिवारका सदस्यहरूले होसियारसाथ अफगानिस्तान जान सल्लाह दिए । बुबा आमाले आशीर्वाद दिनु भयो र हामी १९ जनवरीका दिन ओमानको थमरेट, मस्काट हुँदै अफगानिस्तानको राजधानी काबुलमा उत्रियौं ।



**.जति पढ्यो काबुललाई पढन त्यति नै कुतुहलता बाँकी रहन्छ ।**

काबुल एयर पोर्टमा विभिन्न पोषाकका सेनाहरु तैनाथ छन् । अमेरिकाले हानेको बी-फिफ्टी टुले एयर पोर्टमा ठूलाठूला, झण्डै घर अट्ने खाडल-हरु बनाएका छन्, केही विशाल जहाज टुक्राटुक्रा भएका छन्, हामी राती उत्रिएका थियौं र विहान झिस मिसमा हाम्रो गन्तव्य तर्फ हानियौं । हामी काबुल सहरको मुख्य भाग पुगेर हाम्रो जिम्मेवारीको काम सुचारु गर्न थाल्यौं । त्यसको साथमा भाषा सिक्ने र घटनाका वास्तविकता बुझ्नेतर्फ पनि म तम्सिएँ । कहिले कथा जस्तो लाग्ने कहिले सपना जस्तो लाग्ने अफगानिस्तान काबुलको अवस्था वर्णन गरी नसक्नु छ । आजभन्दा ८ सय वर्षअघि ङ्गोलियाका जँगिज खाँले आफ्ना फौजी लिएर आदिवासी पास्तुन जातिलाई तहसनहस पारी विशाल अफगानिस्तानको एकीकरण गरेको केही बर्षपछि मङ्गोलिया फर्कन्दा १ हजार सेना मात्र छोडेका थिए । तिनैलाई आज हजारा जाति भनेर चिनिन्छन् । नेपालभन्दा साढे ४ गुणा ठूलो मुलुकमा जनसंख्या भने २ गुणा मात्र धेरै देखिन्छ तर तथ्य तथ्याङ्क छैन । यहाँका राष्ट्रिय भाषा पस्तु र दारी पर्सियन हुन् । यहाँको पैसालाई अफगानी भनिन्छ जुन अमेरिकी १ डलर बराबर २५ हजार हुन्छ । मुख्य सहर राजधानी काबुल हो भने अन्य ४ ठूलाठूला सहरहरु हिरात, कन्दहार,

मजरेसरिफ, जलालवाद हुन् । यस देशमा विभिन्न ९ सम्प्रदाय बसोबास गर्दछन् त्यसमा ताजिक, हजारा, पठान, उज्वेक, तुर्केमन, आइमुक, बलुची, करजाइ र नरुस्तानी पर्दछन् । यहाँ सिया र सुन्नी मुस्लिम धर्मलम्वीहरु छन् । यी विभिन्न सम्प्रदाय आआफ्नो क्षेत्र विशेषमा बसोबास गर्दछन् । पाकिस्तान, चीन, ताजकिस्तान, उज्वेकिस्तान, तुर्केमिनिस्तान र इरान यस देशका छिमेकी मुलुक हुन् । यो देश भू-परिवेष्ठित मुलुक हो भने यसको भौगोलिक बनावट २ हजार मिटरको उचाइदेखि ६ हजार अर्थात् हिन्दकुस पर्वत श्रृखलामा अवस्थित छ । यस देशको मुख्य आय स्रोत चरेस, कोकिन, गाँजा निर्यात्‌बाट प्राप्त रकम हो भने अत्यावश्यक वस्तुहरू लत्ताकपडा, खाना लगायत धेरै वस्तु पाकिस्तानले आयात गर्दछ । धेरै देशहरुसँग सिमाना साइनो भए पनि राम्रो कुटनैतिक सम्बन्धको अभावमा अत्यन्तै न्युन वस्तुहरु पाकिस्तानबाहेकका मुलुकहरुबाट आयात निर्यात हुन्छ । यहाँ हिउँद ऋतुमा निक्कै जाडो हुने र हिउँ पर्ने गर्दछ ।

"जङ्गलमा बाघ कराउनु र खोरमा बाखी हराउनु" झैं, भौतिक सम्पन्नताको चरमचुलीमा पुगेको साम्राज्यवादी अमेरिकाको ११० तले वर्ल्ड ट्रेड सेन्टर रहेको जुम्ल्याहा टावर ढलेपछि अमेरिका डर, त्रास र शङ्काको बादलभित्र हराए झैं भयो । बेलायतका प्रधानमन्त्री टोनी ब्लेयर चम्चे रोलमा उत्रिए । अन्तत तालिवानका मुख्य अतिथि ओसामा विन लादेन र उसका अल-कायदा ग्रुपमाथि शङ्का गरी अफगानिस्तानको तालिवान सरकारलाई विन लादेन सुपुदर्गी गर्न दवाव दियो तर तालिवान सरकारले विन लादेनलाई सुपुर्दगी गरेन र गत अक्टोवर ७ तारिखदेखि अमेरिकाले लगातार आक्रमण गऱ्यो तब तालिवान सरकार अपदस्त मात्र भएन उनीहरु एकाएक भाग्न बाध्य भए, कति त बन्दी पनि बनाइए ।

अशिक्षाले ढप्प ढाकेको समाजलाई अत्यन्तै शक्तिशाली वी फिफ्टी टुले मात्र झसङ्ग बनायो । अहिले पनि वी फिफ्टी टुलाई मात्र हतियार सम्झन्छन् यहाँका स्थानीय मान्छेहरु । दुहुनो गाई, जग्गा जमिन बेचेर राइफल किन्ने संस्कृतिका अफगानीहरु रसियन हतियारसँग बढी परिचित छन् ।

युद्ध अल्लाहको निम्ति, मृत्यु उही अल्लाहकै निम्ति सम्झने तालिवान सेनाहरु दिनप्रतिदिन ठूलो सङ्ख्यामा मासिन्दै गए र सरकार पनि अपदस्त भयो तर अफगानिस्तान कसको मातहतमा सुम्पने भन्ने विषयमा अन्तर्राष्ट्रिय समुदायमा ठूलो बहस चल्यो । आखिर अमेरिकासँग निकट सम्बन्ध राख्ने हमित करजाइलाई प्रस्तावित अन्तरिम सरकार प्रमुख बनाइयो । इटालीमा निर्वासित राजा जाहिर शाहलाई फर्काएर वृद्धाहरुको सभा 'लोयागिर्जा'को अध्यक्षता गर्न लगाइएको र सो गिर्जाले ५ महिना पछि अन्तरिम शासनको छनोट गर्नेछ । अमेरिकाको नेतृत्वमा अर्न्तराष्ट्रिय समुदायले देशमा १० प्रतिशत स्थान ओगट्ने उत्तरी गठबन्धनलाई काखी च्यापेर त्यसलाई सिङ्गो अफगानिस्तानप्रति उत्तर



दायी बनाउँदै लग्यो भने उता माष्टर माइन्डेड विन लादेनको खोजी कार्य पनि निरन्तर जारी राख्यो । आतङ्कवादका नायक विन लादेनको निहुमा सिङ्गो अफगानिस्तान तहसनहस बन्न पुग्यो तर अमेरिकाको शक्तिपछाडि आतङ्कवाद विरुद्ध अन्तर्राष्ट्रिय प्रतिवद्धता जाहेर भयो । सारा अन्तर्राष्ट्रिय समुदायले पनि अमेरिकाको सारमासार मिलाउन बाध्य हुनु पऱ्यो ।


*अफगानी महिलाहरू यसरी बुर्कामा बन्द हुनुपर्छ*

सन् १९१९ मा बेलायतबाट स्वतन्त्रता पाएको अफगानिस्तानले तत्कालीन सोभियत संघलाई पराजित गऱ्यो । सन् १९४२ र १९७०को दशकमा अत्यन्तै धेरै गोर्खाली सेना नामका नेपालीलाई मारेको बहादुरी इतिहास बाहेक विगत २३ वर्षको अवधिमा दुःखद समय मात्र पार गरेको छ अफगानिस्थानले । सन् १९८९ देखि १९९६ सम्म प्रजातन्त्रको अभ्यास गऱ्यो त्यही अफगानिस्थानले । मुजाहिद्धीनको नेतृत्वमा झण्डै १० वर्ष लामो रुसी शासकहरुलाई पराजित गरी रुस फर्कन बाध्य बनायो तत्कालीन सोभियत युनियनका कम्युनिस्टहरूलाई । सन् १९९६ सेप्टेम्वर २७ का दिन राष्ट्रपति नाजिवुल्लालाई ट्राफिक पोस्टमा झुण्डाई मार्ने काम भयो । रसियालाई पराजित गरेपछि विभिन्न सम्प्रदायका अफगानी जनताहरु मुजाहिद्धीनले नेतृत्व गरेको पार्टीबाट फुटेर आफैंआफैं विध्वंसात्मक र वीभत्स युद्ध गर्ने काम भयो । त्यसै बेलाको कमजोर परिस्थितिको मौका पारी तालिवानले तत्कालीन सरकार अपदस्त गरी आफ्नो तालिवान सरकार निर्माण गरेर राज्य सञ्चालन गर्न सुरु गऱ्यो जसको अन्तिम सरकार प्रमुख अहमद ओमार भए ।

**वर्ल्ड ट्रेर्ड सेन्टर रहेको जुम्ल्याहा टावर ढलेपछि अमेरिका डर, त्रास र शङ्काको बादलभित्र हराए झैं भयो । बेलायतका प्रधानमन्त्री टोनी ब्लेयर चम्चे रोलमा उत्रिए ।**

## अफगानिस्तानको वर्तमानअवस्था र जनजीवन

जब राजा जाहिर शाहलाई आफ्नै भतिजा डाउटले

अपदस्त गऱ्यो तब उनी इटालीमा निर्वासित बने । यसपछ मुजाहिद्धीनले शासन गरे । मुजाहिद्धीनले शासन गरिरहेकै बेला पार्टीमा फुट आयो र आपसमा अत्यन्तै हिंसात्मक एवम् विध्वंसात्मक युद्ध सुरु भयो । त्यस रक्तपातपूर्ण युद्धमा कति मान्छे मरे यकिन छैन, तर उत्तरी काबुल बस्ने दारी भाषा शिक्षक (जसले हामीसँग इन्टरप्रेटरको काम गर्ने दाउद)काअनुसार विगत २३ वर्षभित्र झण्डै ५ लाख मान्छे मारिए । त्यस विध्वंसात्मक युद्धले काबुल सहरलाई भग्नावशेष अर्थात् चिहानै चिहानको शहरमा परिणत गऱ्यो । गृहयुद्ध पूर्व ७ लाख ७५ हजार जनसङ्ख्या बसोबास गर्ने काबुल सहरको झण्डै ९० प्रतिशत घरहरु ध्वस्त भए । घरका भग्नावशेषहरुमा ३५ हजारभन्दा बढी विद्युतीय धराप विछ्याइएको कारण स्वतन्त्र घुमफिर गर्न सम्भव छैन । त्यहाँ विद्युतीय धराप निष्कृय बनाउन केही गैरसरकारी संस्थाहरु कार्यरत देखिन्थे । उक्त धरापमा परी प्रत्येक दिन, हप्तामा बालबालिका हताहात भइरहेको समाचार सुनियो । गृहयुद्धले ध्वस्त साथै ३ वर्ष बढीको खडेरीले त्यहाँको जीवनस्तर अत्यन्त गिरेको छ । लामो समयदेखि विकृत संस्कृतिको रक्तपातपूर्ण समयमा लाखौं लाख मानिस शरणार्थी भएर पाकिस्तान, इरान आदि छिमेकी मुलुकमा गई बसेकाहरु हामी त्यहाँ रहँदा धमाधम घर फर्कन थाले । तर दुःखको कुरा प्रायः सबैका घर पूर्ण नष्ट भएको पायौं । छोराछोरी, श्रीमती, बुबाआमा पूरै परिवार धेरैले गुमाए तर उनीहरुलाई आफ्नै देश प्यारो लाग्छ र भोकै पेट भए पनि स्वदेश फर्किएका छन् ती विदेशिएका अफगानीहरू । उनीहरु ध्वस्त भइसकेको आफ्नो घरमा त आइपुगे । तर खान बस्नको कुनै व्यवस्था छैन । डाँडापाखा जति उजाड छ त्योभन्दा हृदयविदारक उनीहरुको अवस्था छ । अन्तर्राष्ट्रिय शक्तिको ठूलो उपस्थितिको कारण उनीहरुले सुरक्षाको अनुभूति गर्न थालेका छन् भन्ने हामीले महसुस त गऱ्यौं तर त्यसको मापन गर्ने हामीसँग कुनै साधन थिएन । उनीहरुलाई सुरक्षा दिनेमध्ये त्यहाँका स्थानीय पुलिसले भने करीव ७ महिनादेखि तलब पाउन सकेका छैनन् ।

एक समय म काबुलको पश्चिमी भागमा पर्ने कार्तोचे नजिकको देव्रीमा हिंडिरहेको थिएँ । त्यसबेला एकजना बालक मेरो नजिक आयो । ऊ हिन्दी बोल्न जान्दथ्यो । ऊसँग मैले केही समय गफ गरें । उसको घर भत्किएर खरानी भएको छ रे, बुबाआमा तालिवानले माऱ्यो रे । त्यसपछि ऊ छिमेकीसँग पाकिस्तान गएको थियो रे, उसले हिन्दी पनि पाकिस्तानमै सिक्यो रे । करिब २ वर्षको शरणार्थी भएर ऊ २ दिनअघि मात्र काबुल आइपुगेको रहेछ । मसँग उसका पीडा र वेदना सबै पोख्यो, उसको खाने र बस्नेको कुनै टुङ्गो छैन त्यसैले मसँगै जाने अनुरोध गऱ्यो । मैले धेरै सात्वना र साथमा भएको केही पैसा दिएर सम्झाए । अर्को दिन लिम्बू बालक झैं लाग्ने अलि मोटो भलादमी र सुन्दर देखिने जान मेरो नजिक आएर धेरैवेर झुम्यो ऊ दुःखसुख अङ्ग्रेजी बोल्न जान्दथ्यो । त्यो ठिटो ११ वर्षको हुँ भन्थ्यो, ऊ आफ्नो काका काकीसँग बसेको र काकाका २ भाइ अरु



सन्तान पनि भएको तर पनि उसलाई काकाले धेरै माया गरेको कुरा गऱ्यो मसँग । उसको बुबाआमाको बारे सोध्दा मैले सोधें । उसले निन्याउरो मुख लाएर भन्यो -गाउँबाट काबुल आउँदै गर्दा राती वास बसेको ठाउँमा विधुतीय धरापमा परी बुबा, आमा र भाइको एकै ठाउँमा मृत्यु भयो । जान त्यसबेला ६ वर्षको मात्र थियो रे त्यसैले उसलाई त्यो घटना थोरैमात्र थाह छ ।

अस्थायी रुपमा म रहमान बब हाइस्कुल देव्रीमा बसोबास गर्दै आएको छु । स्कुल वरिपरि भत्किएका, गोलीले छियाछिया पारिएका थुप्रै घरहरु छन् । ती घरहरुमा भर्खरैदेखि प्लास्टिकको बेरा लगाई कतै थोत्रो लुगाफाटाले झ्याल ढोका टालेर छ्यासछ्यास्ती मान्छेहरु बसोबास गर्न थालेका छन् । रातपख बेलैमा घरभित्र पस्छन्, भत्किएका घरका काठ दाउरा बालेर आगो ताप्दै रात विताउँछन् यहाँ एक हप्ता अघिदेखि हिउँ परिरहेको छ । विहान बेलुकी माइनस १० देखि १५ डिग्रीसम्म जाडो हुन्छ, तर ती मानिसहरु कसरी रात विताउछन् के खान्छन् बडो विरक्त लाग्दो छ । हाल अफगानिस्तानको जस्तो समस्याग्रस्त अवस्थामा प्रत्यक्ष म पुगेको पूर्वी टिमोर, मेसोडोनिया जस्तो फलफूल इत्यादि खानेकुराहरु यो हिउँद बेला अफगानिस्तानमा छैन । यहाँ त सिर्फ हिउँ परेर नाङ्गा डाँडा पाखा हिमाल बनेको छ, विगत ३ वर्षदेखि पानी पटक्कै नपर्नाले पिउने पानीकै हाहाकार मच्चिएको छ, काबुल नदी र पाइरिस ताल ठप्प सुकेको छ र काबुल शहर धूलोले छोपिएको छ । कुन्नि मानव आतङ्कमा भगवानले पनि आतङ्क मच्चाउन सघाउछन् कि ? मसँग काम गर्ने अर्को स्थानीय साथी नासिर भन्छ - हामी मुस्लिम दिनमा ५ पटक पूजा प्रार्थना गर्छौं तर किन हो अल्लाहले हामीप्रति दया गरेनन्, विल्कुलै पानी पारेन, ऊ शिक्षित व्यक्ति हो ऊ भाषा अनुवादकको काम गर्छ तर ऊ भगवान्प्रति ठूलो आस्था र विश्वास राख्छ, प्रत्येक व्यक्ति शिक्षित अशिक्षित धनी गरिब सबै अफगानीको विशेषता नै अल्लाहप्रति आस्थावान हुनु हो । यहाँको पीडामा विश्व पनि दुखेको छ । संयुक्त राष्ट्र संघले चामल, दाल आदि बाड्ने गर्छ तर त्यो विल्कुलै पर्याप्त छैन र

**उसले निन्याउरो मुख लाएर भन्यो - गाउँबाट काबुल आउँदै गर्दा राती वास बसेको ठाउँमा विधुतीय धरापमा परी बुबा, आमा र भाइको एकै ठाउँमा मृत्यु भयो । जान त्यसबेला ६ वर्षको मात्र थियो रे ।**

प्राप्त चामल दाललाई पनि अल्लाहकै दया सम्झन्छन् । अफगानीहरु धर्मप्रति पूरै अन्धोभक्त छन् । यसको कारण तालिवानको शासनपछि सम्पूर्ण विद्यालय बन्द गरिनु, बालबालिकालाई धार्मिक शिक्षामा सीमित गरिनु हो । नरसंहार मच्चिनु पूर्व १५ हजार विद्यार्थी रहेको काबुल युनिभर्सिटीको विद्यार्थी सङ्ख्या एकाएक घटेर ३ हजारमा झरेको तितो यथार्थ पनि छदैछ ।

बहुराष्ट्रिय सेना (आई.एस.ए.एफ.)को उपस्थितिपछि पटक पटक बस्दै आएको संयुक्त बैठकमा आआफ्नो जात र सम्प्रदायका मुख्य व्यक्तिहरुबाट व्यक्त गरिएको धारणाअनुसार अब उनीहरु सबै लामो समयसम्मको गृहयुद्धबाट दिक्दारी भएका छन् । अब उनीहरु शान्ति चाहन्छन् । अन्तर्राष्ट्रिय शक्तिको प्रवेश मात्र हैन उनीहरूको जवर्जस्त उपस्थितिमा उनीहरूको मन जति दुखे पनि अधिकांश जनताहरु खुसी नै देखिन्छन् व्यवहार र बोलीमा । देश सञ्चालनका लागि अन्तरिम सरकारबाट नयाँ संविधानको प्रारुप निर्माण धमाधम भई नै रहेको छ । नयाँ डिजाइन गरिएको राष्ट्रिय झण्डालाई भने धेरैले मन पराएका छन् ।

**अफगानी संस्कृति र यसका रोचक पक्ष :**

विश्वका विभिन्न संस्कृतिमध्ये एक मुस्लिम संस्कृति हो । यहाँ विशेष गरी महिलाप्रतिको संस्कृति बडो अनौठो छ । मुस्लिम संस्कृतिको एक विशेषता बुर्का यहाँका प्रत्येक महिलाले ओढ्नु पर्छ । आइमाइले कुनै पनि लोग्ने मान्छेलाई सिधै हेर्न पाउँदैन न त लोग्ने मान्छेले आइमाईलाई नै तर लोग्ने मान्छेले चाहिं अनुहार छोप्नु पर्दैन । लोग्ने मान्छेले जम्मा ४ वटी स्वास्नी ल्याउनु वैधानिक मानिन्छ भने तालिवान समयमा महिलाले स्कुल गई अध्ययन गर्नसम्म पाउँदैन थिए । बालबालिका र आइमाईले जे जति सिक्नु पर्थ्यो मस्जिदमा गएर धर्मगुरुबाट मात्र सिक्नु पर्थ्यो । रुसको १० वर्ष शासन कालमा बनेका विशाल विद्यालय र विश्वविद्यालयका भवनहरु रुग्न अवस्थामा पुगेका छन् । ती भवनहरूको सदुपयोग अत्यन्त कम भएको छ । यहाँका जनताले जुनसुकै घटना दुर्घटना व्यहोर्नु परे पनि सबै अल्लाहको कृपा भनी स्वीकार्नु पर्छ । अफगानीहरु यतिसम्म धर्ममा कट्टर हुन्छन् कि अल्लाहबाहेक विल्कुल अरु भगवान् र धर्म नै छैन भन्ने दावा गर्छन् ।

महिलाले अनिवार्य बुर्का लगाउनै पर्ने नलगाए जेल जानु पर्ने, पढ्न नपाउने, फिल्म हेर्न नहुने, फोटो खिच्न नहुने, बस कारमा यात्रा गर्दा अगाडिको सिटमा बस्न नपाउने जस्ता व्यवहारलाई समग्रमा भन्नु पर्दा मान्छेले मान्छेलाई नै मानवीय मान्यता नदिए झैं देखिन्छ । अझ साधारण विरामीदेखि सुत्केरी महिलालाई समेत अस्पताल प्रवेश निषेध जस्ता कुराहरु अफगानी संस्कृतिका अत्यन्तै निन्दनीय कुरा हुन् ।

मैले प्रायः मसँग काम गर्ने साथी दाउदलाई रमाइलो गफकै चक्करमा एउटा



प्रश्न सोधें - सबै महिलाले बुर्का लगाई अनुहार छोप्छन् भने कसरी केटी हेरेर विवाह गर्नुहुन्छ तपाईहरु ? दाउदका अनुसार केटीको देखिने भाग खुट्टा हो, खुट्टा हेरेर पनि चिन्न सकिन्छ र उनीहरु साह्रै टाढा साइनो पर्नेलाई विवाह गर्दैनन् मुख्य गरी विवाहको निम्ति केटाकी आमा केटीको घर जानुहुन्छ । वहाँले नै निर्णय गर्नुहुन्छ । त्यसपछि केटाले सहमति जनाएपछि विवाह गर्ने काम हुन्छ । दाउद स्वयं पनि केही समयपछि विवाह गर्नलाई केटी मगनी भइसकेको व्यक्ति हो । केही दिनअघि मध्येरातसम्म सँगै काम गर्न आएको प्रहरी कादर ठाउँहरु देखाउँदै भन्छन्, उसले पनि पहिलेको नरसंहारमा धेरै मान्छेहरु मार्न वाध्य हुनुपर्‍यो । ३५ वर्षीय कादरका परिवार पाकिस्तानमा छ, हेर्दा अत्यन्तै भलादमी देखिने कादरको जुँगा दारी झण्डै आधा फिटभन्दा लामो छ । किन यति लामो भन्ने प्रश्नमा उनी भन्छन्, "यो हाम्रो संस्कृति हो हामीले जुँगा दारी कपाल काट्नु अफगानी संस्कृति विपरीत हुन जान्छ ।" उसले नरसंहारताका धेरै हजारा जातिलाई मार्‍यो । ऊ सिया हो भने हजारा जाति सुन्नि हुन् । आजसम्म पनि अफगानिस्तानमा ठूलो जातिय विभेद, धार्मिक असहिष्णुता छँदैछ त्यसैले आपसमा झगडा गर्ने पनि संस्कृति नै बनेको छ ।

**अन्तर्राष्ट्रिय सुरक्षा र काबुलमा नेपालीको लोकप्रियता**

लामो बहस र छलफलपछि गत ५ डिसेम्वरमा जर्मनको वोनस्थित एक निर्णायक निश्कर्ष आयो । यो निस्कर्षअनुसार अहिले अफगानिस्तानमा बेलायतको नेतृत्वमा अस्ट्रिया, बेल्जियम, बुल्गेरिया, डेनमार्क, फिनल्यान्ड, फ्रान्स, जर्मन, ग्रिस, इटाली, नेदरल्यान्ड, न्युजील्यान्ड, नर्वे, पोर्तुगल, रोमानिया, स्पेन, स्वीडेन र टर्की गरी १८ राष्ट्र संलग्न सयुक्त रुप International Security Assistance Force (ISAF) सक्रिय छ ।

अफगानी जनता, नोर्दन एलायन्स र अन्तर्राष्ट्रिय समुदाय बीचको ठूलो वादविवादपछि नोर्दन एलायन्सको चाहना विरुद्धै भए पनि अन्तर्राष्ट्रिय शक्तिले सुरक्षा सहयोगार्थ आआफ्नो कडा रवाफका साथ अफगानिस्तानमा पाइला टेकी छाड्यो । बेलायतका जनरल मेकलको नेतृत्वमा कार्यरत रहने अन्तर्राष्ट्रिय सुरक्षा

**प्रहरी कादर ठाउँहरु देखाउँदै भन्छन्, उसले पनि पहिलेको नरसंहारमा धेरै मान्छेहरु मार्न वाध्य हुनुपर्‍यो । ३५ वर्षीय कादरका परि वार पाकिस्तानमा छ, हेर्दा अत्यन्तै भलादमी देखिने कादरको जुँगा दारी झण्डै आधा फिटभन्दा लामो छ ।**

**... परिवर्तनलाई काखी च्यापेर वामियान प्रान्तको २५ सय वर्ष पुरानो बुद्धको मूर्ति तोड्ने, राष्ट्रपतिलाई झुण्डाई मार्ने, एक आपसमा लड्ने परम्परालाई विसाएर ..परिवर्तनका लागि भर्खरै अघि सर्दैछ अफगानिस्तान**

समूहअन्तर्गत बेलायती राजदूतावास काठमाडौंले गत असोज २२ गते जानकारी गराए अनुसार झण्डै एक सय 'स्पेसल गोर्खा पाराटुपर्स' संलग्न हुने छन् । विश्वमै बहादुर कहलिएका गोर्खा सैनिकलाई विश्वकै मिडिया क्षेत्रले फेरि एक पटक पुनः परिचित गराइदिए ।

स्थानीय बासिन्दा र सञ्चार माध्यायमका अनुसार मिश्रित खतरायुक्त काबुलमा गोर्खाली सेना नै सबैभन्दा प्रभावकारी समूह हो । त्यसको कारण अधिकांश अफगानीहरु हिन्दी, उर्दू बोल्नु र गोर्खालीले पनि बोल्नुको अलावा हाइट, साइज, रङ्ग, रुप, आनीवानी आदि कुराहरु उस्ताउस्तै हुनु हो भने गोर्खाली सैनिक मात्र त्यस्तो पहिचान बोकेको शक्ति हो जसले २ देशको प्रतिनिधित्व गर्दछ - पहिलो नेपाल दोस्रो बेलायत ।

जीवन दुःख र पीडा मात्र हैन । जीवन खुसी, हर्ष, मित्रता, सौहार्दता पनि त हो । दुखेर जीवन कति बाँच्नु, जीवन हाँसेर, भावना आदान प्रदान गरेर पनि बाँच्नु पर्छ । यही उद्देश्यका साथ गत फेब्रुअरी १८ तारिखका दिन काबुलको ३ नम्बर र ५ नम्बरमा विभाजित जिल्लामा बेग्लाबेग्लै गरी यहाँका स्थानीय जनताहरू एवम् पुलिससँग गोर्खालीले मैत्रीपूर्ण भलिवल खेल खेल्नुका साथै बालबच्चाको लागि विभिन्न खेलकुद आयोजना गरेको थियो । खेलकुद सुरुवात पूर्व विश्वप्रसिद्ध ब्रिग्रेड अफ गोर्खाज वेण्डले विभिन्न नेपाली राष्ट्रिय धुन, नेपाली राष्ट्रिय पोषाक दौरा सुरुवालमा खुकुरी नाच प्रस्तुत गरेको थियो । सो खेलकुदमा बिजयी व्यक्ति र समूहलाई यु.के. फुटबल एसोसियसनबाट प्राप्त आकर्षक पुरस्कारहरु प्रदान गरिनुको अतिरिक्त स्थानीय टिमले पनि गोर्खालीलाई पाहुनाको सत्कार स्वरुप फूलगुच्छा प्रदान गरेको थियो । उक्त कार्यक्रममा कर्पोरल दिल्लीकुमारले दारी भाषामा उदघोषक गर्नु अर्को रोचक पक्ष थियो ।

### उपसंहार

अफिमले झै धर्मले पूरै लपिएको अफगानिस्तान अस्थिरता र अनिश्चिताले ज्यादै गम्भीर अवस्थामा गुज्रिरहेको छ । अशिक्षा र मुर्खता भनौं कि अज्ञानताले ढप्प ढाकेको छ, आपसमा सहिष्णुता



रत्तिभर छैन । उनीहरु धर्मका लागि जात सम्प्रदायको लागि एक आपसमा लड्छन् र उनीहरु अल्लाहको लागि मर्छन् । त्यसैले उनीहरु बहादुर पनि छन् । सन् १९४२ र १९७८ मा इस्ट इन्डिया कम्पनीले रुसका कम्युनिस्ट रोक्न पठाएका गोर्खाली सैनिक नामका १२ हजार भन्दा बढी नेपालीलाई प्रायः पूरै मारेका थिए । यहाँ हिजो महिलाहरुलाई मानवीय संवेदनाभन्दा टाढा राखेर दमन गरिन्थ्यो र आज पनि त्यो खासै परिवर्तन भइसकेको छैन ।

देशविदेशको प्रभाव र समय सापेक्षित काल परिस्थितिअनुसार परिवर्तन हुनुपर्छ । हो, त्यही परिवर्तनलाई काखी च्यापेर वामियान प्रान्तको २५ सय वर्ष पुरानो बुद्धको मूर्ति तोड्ने, राष्ट्रपतिलाई झुण्डाई मार्ने, एक आपसमा लड्ने परम्परालाई विसाएर अन्तर्राष्ट्रिय शक्तिको आर्शीवाद र मान्यताबाट परिवर्तनलाई भर्खरै अघि सर्दैछ अफगानिस्तान । तर मुस्लिम दर्शनसम्मत तालिवान शक्तिको पतन् पुनः तुरुन्तै पुनरुत्थानन्मुख हुन पनि सक्छ । भूतपूर्व नेता गुलवुद्धिन र पाकिस्तानलाई सराप्दै रोइबसेका अफगानी बुद्धिजीवीहरु एउटा आतङ्कलाई अर्को ठूलो आतङ्कवादी शक्तिबाट पराजित गरिनुले केही हद खुशी पनि देखिन्छ । सायद यस्तो खुशी सधैंलाई आइदिए अफगानीको यो दिन र भविष्य पनि उज्वल बन्ने नै छ ।

मैले भत्किएको घरभित्र पसेर खोज्दा, भोकले छटपटाउने मान्छेका पेटमा पस्दा, चिहानमाथिको चिहानलाई खोतलेर हेर्दा, मान्छे सोसरह भएर बाँच्न नपाउने महिला आमा, दिदीलाई छोएर भेट्दा, अन्धविश्वासी धर्ममा चुर्लुम्म डुवेको अफगानिस्तानलाई बचाउँदा मैले जुन माटो टेकें, जसजसलाई भेटें, जेजे देखें त्यही नै यहाँ मैले लेखें अथवा यसो भनौं सम्झेको जति सुनाएँ ।

जय प्रवास !

*२० फेब्रुअरि २००२*
*देव्री कार्तोचे*
*कावुल*

# बलात्कृत टिमोरको पुनः दुःखेको घाउको पीडा

भर्खरै मात्र मुक्तिको सास फेर्न पाएको पूर्वी टिमोर अन्तर्राष्ट्रिय जगत्‌को लागि नै महत्वपूर्ण मानिन्छ । चाहे भौगोलिक दृष्टिकोणले होस्‌ या राजनैतिक या धार्मिक । स्वतन्त्रताको खातिर लड्ने पूर्वी टिमोरी आदिवासी जातिहरुलाई निसाना बनाइ मच्चाइएको संहारमा केकति क्षति भयो, किटान हुन गाह्रो पर्छ । विशेषगरी त्यहाँका राजनैतिक मोर्चा सी.एन.आर.टी. र गुरिल्ला मोर्चा फालिन्टाइल र अप्रत्यक्ष रुपबाट इन्डोनेशिया सेनाको सहयोग पाएका मिलिसिया गुटबीच चलेको स्वतन्त्रताको निम्ति सबैभन्दा अन्तिम र अत्यन्तै हिंस्रक नरसंहारमा एक पटक विश्व नै रोएको थियो । त्यस हत्या आतङ्कलाई रोक्ने सिलसिलामा यो पङ्क्तिकारभन्दा केही दिनअघि अम्विनो भन्ने ठाउँमा पुगेको साथीलाई गरेको प्रश्नपछिको उत्तर थियो । यहाँ मान्छे थोरै मात्र देखिन्छ, त्यसमा पनि आजसम्म मैले देखेका र भेटेका युवतीहरु सबै नै गर्भवती छन्‌ । त्यसको भोलिपल्ट त्यहाँ जंगलबाट फर्केका स्थानीय व्यक्तिहरुलाई भेटेर जानीनजानी तेतुम भाषामा कुरा गरें । अन्दाजी १९ वर्षकी मारिया नामकी युवतीले निसंकोच अप्ठेरो नमानी उनले भनिन्‌, - मलाई इन्डोनेशियन सी.एन.आर.टी.ले बलात्कार गऱ्यो । पुरानो लुगा लगाएका खाली खुट्टा हप्तौंको भोक सहेर मतर्फ अघि बढिरहेकी एक महिलालाई प्रश्न राखें -लोग्ने कहाँ छ ? उनले सहजै उत्तर दिइन्‌ - मिलिशिया पतर (मिलिशियाले मारिदियो) । अहिले म यी मेरा सानासाना नानीहरुसँग छु । च्यापिरहेको सानो नानी बिरामी थियो । आफ्नो लोग्नेको कुरा गर्ने बित्तिकै उनले नराम्रो मानिन्‌, शायद उसैको नजरसामु लोग्ने मारिएको थियो । उनी चाहिँ बलात्कारपछि भागेकी थिइन्‌ । अर्की भर्खर १७ वर्षकी आना हामीसँग बोल्न धेरै नै आतुर थिइन्‌ तर उनी अङ्ग्रेजी बोल्दैनथिन्‌ र हामी तेतुम कमै मात्र बोल्यौं । शिष्टाचारको कुरा बाहेक अरु कुरा खासै हुन सकेन । अर्कोपटक काँचो रुखकटहर काटेर खाँदै गरेको २ जना आधा उमेरका लोग्ने मान्छेहरुसँग भेट भयो ।



उनीहरुमध्ये सोकोले भन्यो - हामीसँग बन्दुक हातमा थिएन त्यसैले भाग्यौं, श्रीमती चाहिँ आतम्बुवा टापुमा समाएर लगे । प्रश्न फेरि थपें -केटीहरुमात्र किन लगेको ? के तपाईलाई विश्वास छ ? तपाईको श्रीमती छोरीहरु जीवितै छ भनेर ? नरमाइलो मुद्रामा उसले भन्यो - किन लगेको, के गर्दैछन्‌, थाहा छैन तर आज राति सपनामा देखेको थिएँ भगवान्‌नै जानुन्‌ जीवितै छन्‌ उनीहरु । प्रसङ्ग परिवारको झिक्ने बित्तिकै ऊ निराश मुद्रामा थियो ! नहोस्‌ पनि किन विचरा उसले महिना दिन अघिमात्र विवाह गरेका रहेछ । पुगनपुग १५० जना नेपालीहरु सर्वप्रथम हत्या आतङ्क रोक्न -को खातिर २० सेप्टेम्बरमा टिमोरको राजधानी डिली -को कोमरो एयरपोर्टमा उत्रिएको दिन विहान नेपालको चैत जस्तै अति सुख्खा थियो । विना पातका रुख र डडेलो नलागेको त जङ्गल नै थिएन । धमाधम बस्तीका घरहरु जलिरहेका थिए । धुवाँको मुस्लोले झनै आतंकित तुल्याउँथ्यो । हामी बसेको नजिकै २ जना मिलिसियालाई अस्ट्रेलियाका आर्मीहरुले एकैछिनमा मारिदिए । त्यसपछि हामी संयुक्त राष्ट्र संघको कार्यालयको कम्पाउन्डतर्फ लाग्यौं । मिश्रित खतरा थियो । मेरो आफ्नो काममा डिलीबाट अन्दाजी २० कि.मि. बाटो हुँदै धेरै अग्लो डाँडाको जङ्गलस्थित चामल र दाल लिएर गएँ । त्यहाँ ३ साताभन्दा अघिदेखि सी.एन.टी.का हजारौं सदस्यहरु आफ्नो बालबच्चासँग भोकभोकै बसिरहेका थिए । पहिला आफू सानो छाप्राको गोठमा बसेको याद आयो । सुविधाको लागि सेउलाहरु बिछ्याइएको थियो । लोग्ने, आइमाई, केटाकेटी, तरुना, तन्नेरी सबै एकै ठाउँमा बस्दा रहेछन्‌ । त्यहाँ सयौं बालबालिकाहरु विरामी थए, सुत्केरी सबै एकै ठाउँमा बस्दारहेछन्‌ । सुत्केरीहरुले स्याउलाको विछ्याउनालाई प्रसुती गृह सम्झिरहेका थिए । यदि यो सुख्खायाम नभई वर्षायाम भई पानी पर्नु हो त उनीहरुको बस्ने विकल्प के थियो ? कुनै जवाफ थिएन । आफ्नो गुरिल्ला सैनिक



*ज्यान जोगाउन जङ्गल पसेका पूर्वीटिमोरका जनताहरूको बीचमा लेखक*

फालिन्टाइलले धान्न नसकेपछि एकाएक विस्थापित हुन पुगेका ती टिमोरिसहरु धेरै हतास र निराश थिए । हाम्रो आगमनले उनीहरुलाई भित्रिदेखि नै सहारा मिलेछ । हामी पुग्ने बित्तिकै झुण्डिदै रोए, आफ्नो वेदना पोखे, अनगिन्ती चिच्याए, हामीले सान्त्वना दियौं, त्यो विकराल अवस्था देखेर हाम्रो हृदय रोइसकेको थियो । धेरै खटेर, मन लगाएर सहयोग गऱ्यौं सम्झायौं । आखिर उनीहरु त्यही बुझे होलान हामीलाई यसले सान्त्वना दिंदैछ । अफसोच भाषा अनमेलको कारण, नजरसामु पनि टाढा बन्नु परिरहेको थियो । अर्को पटक पृथ्वी विनासलाई प्रलय नै भए जस्तो गरी विध्वंश क्षतविक्षत गरिएको डिली सहर बीचमा पुगें त्यहाँ बिजुली, पानी, सञ्चार, यातायात ठप्प थिए । सडकहरु सुनसान थिए । त्यस दिन पूरै डिली सहर घुम्दा एउटा पनि नजलेको घर थिएन । कुकुर, सुँगुर, बिरालो, कुखुरा कतैकतै गाईगोरु, बाख्रा जतातत‍ै छाडा थिए । सहरको मैला कागजपत्रले सडक नै पूरा ढाकेको थियो । मौसम पनि ४० डिग्रीभन्दा माथि नै थियो । आत्मा जति नै रोएको थियो, खतरा त्यति नै धेरै थियो, तै पनि कहाँकहाँ सम्झदा मेरो जन्मभूमिबाट टाढा आई मानवीय सहयोग गर्न पाउनु र मर्नै परे पनि बेग्लै मज्जा मानिरहेको थिएँ । टिमोरमा हाम्रो प्रवेशको केही दिनपछि आफूलाई सुरक्षित सम्झी केही स्थानीय नागरिकहरु दिउँसो घर आउने राति जङ्गल फर्कने गर्न थाले । केही दिनपछि थाहा पाउनेहरु भटाभट फर्कन थालिसकेका थिए । जुन बेला विधुवा हुनेहरु विधुवा भइसकेका थिए, राँडा हुने भइसकेका थिए, टुहुरा हुने नानीहरु जतातत‍ै भौंतारिरहेका थिए । भर्खरै ११ वर्ष पुगेकी सोनिया नाम गरेकी एक युवती प्रत्येक बिहान बेलुका सिमलहरा साग अर्थात् उनीहरुकै भाषामा काङकुङ टिप्थी र बेलैमा घर फर्किन्थी । उनीलाई सोध्दा भन्थिन् - म ४ कक्षामा पढ्छु मेरो २ वटा भाइ छ, खानेकुरा केही छैन त्यसैले यो काङकुङ उसिनेर खुवाउँछु । बुबाआमा, दाजुभाइ सोध्दा भन्थिन्- हामी सबै घरमा थियौं, घर बाहिरको सिखुवामा बुबालाई निधारमा गोली हानेको थियो, आमालाई समातेर पिट्दै थिए । एकछिनपछि म डराएँ अनि सानो भाइ बोकेर पछाडिबाट भागें, अर्को भाइले पनि पछ्यायो । मलाई धेरै डर लागिरहेको थियो, त्यसैले बेलुकी मात्र घर गएँ । बुबा बलेसीमा लडिराख्नु भएको थियो, आमाको मुख बाँधिएको थियो, एउटा हात काटिएको थियो, स्तनमा छुरी रोपिएको थियो । मैले बोलाएँ तर बुबा बोल्नु भएन । आमा पनि बोल्नु भएन । मेरो विचारमा उहाँहरु अघि नै मारिसक्नुभएको थियो । त्यस रात दुईजना भाइहरूसँग रातभरि त्यही बसें । बिहान अरु मान्छेलाई पछ्याएँ र २ दिनपछि सी.एन.आर.टी. भएको ठाउँमा पुग्यौं । बुबाआमाको याद आउँछ ? बुबा के काम गर्नु हुन्थ्यो ? भन्ने प्रश्न गर्दा झनै सोनियाको मलिन अनुहार भइसकेको थियो । टुहुरी सोनिया कक्षा ४ मा अंग्रेजी पनि पढाइ हुने स्कुलमा पढ्दिरहिछिन् । काम लचाउन सक्ने गरी राम्रो अङ्ग्रेजी बोल्थिन् । हामीले दिएको चकलेट, विस्कुट थोरै उनी खान्थिन् र बाँकी भाइहरुलाई भनेर फाटेको



जामामा पोको पार्थिन् ।

टिमोरको सुदूर पूर्व लसपालेसमा पनि त्यही हालतको विध्वंश थियो, जति डिलीमा थियो । अङ्ग्रेजी भाषा एकाधले मात्र बोल्थे । म आफ्नो सेवाको दौरानमा एक जमात नजिक पुगेर केही जान्न लालयित थिएँ, भाग्यवश त्यहाँ अङ्ग्रेजी बोल्ने एक प्रोफेसर आलिसलाई भेटें र सोधें - यहाँका मानिस अहिले के खाएर बाँचिरहेका छन् ? किन तपाईहरुले यो नरसंहार भोग्नुपऱ्यो ? उसले सहजै उत्तर दिंदै गयो - हाम्रो टिमोर टिमुरमा धेरै आँप, केरा, नरिवल, भुइँकटहर, रुख कटहर, अम्बा, सखरखण्ड, सिमल तरुल आदि फलफूल पाइन्छ, त्यही नै भोकको झोकमा खाँदै बसेका छौं । साँच्चै भन्नुपर्दा पूर्वी टिमोर नेपाल भन्दा २५ औं गुणा सानो क्षेत्रफलको छ । अति सफा समुद्र किनार अर्थात् भौगोलिक बनावट र फलफूलको उपलब्धिले एउटा बगैंचा नै हो कि भन्ने भान हुन्छ । उसले अझ चाख दिएर भन्दै अघि बढ्यो।

वास्तवमा ११६ वर्षसम्म यो स्वतन्त्र पूर्वी टिमोर पश्चिमी मुलुक पोर्चुगलको उपनिवेश र पछि युडीटी पक्षले गर्दा सन् १९७५ देखि इन्डोनेसियाको २७ औं प्रान्त जबर्जस्ती बन्यो । यस कारण टिमोरका संवैधानिक अधिकार पोर्चुगलसँग छ । जति नै लामो समय औपनिवेशिक दमनमा बस्नु परे पनि हाम्रो जातीय, धार्मिक र वर्गीय संघर्ष बाध्यताले गर्दा दिनानुदिन बढ्दै गयो । फलस्वरुप इन्डोनेसियाको २४ वर्षे शासनपछि १४० वर्षमा स्वाधीन बन्न पाउने शतप्रतिशत विश्वस्त छौं । हामीले पश्चिमेलीहरुको अनुग्रह, आशा र रुचिमा गुरिल्ला युद्ध गरेका होइनौं । इन्डोनेसिया कट्टर मुस्लिम राष्ट्र हो भने यसको २७ औं प्रान्त टिमोरमा हामी ९१ प्रतिशतभन्दा बढी रोमन क्याथोलिक छौं । यहाँ इन्डोनेसियन मुलुकहरुबाट हामी आदिवासीमाथि जातीय रङ्गभेद गरिन्छ, वर्गीय शोषण चरम छ, मानवीय हैसियतको स्वतन्त्रता छैन । हामी पनि एसियाको शक्तिशाली मुकुलप्रति आस्था राख्छौं, तर अहिले त्यो कुरा गौण बन्यो । यसरी मर्न तयार छौ तर हामीबाट स्वतन्त्रताको पक्ष नै रोजियो फलस्वरुप जनमतद्वारा प्राप्त परिणाममा ७८.५ प्रतिशत स्वतन्त्रवादी जनशक्ति हामी छौं । उपेक्षा र दमनको कारण हाम्रो सामाजिक

**पूरै डिली सहर घुम्दा एउटा पनि नजलेको घर थिएन । सुँगुर, कुखुरा गाईगोरु, बाख्रा जतातत‍ै छाडा थिए । ...आत्मा जति रोएको थियो, खतरा त्यति नै धेरै थियो, तै पनि मेरो जन्मभूमिबाट टाढा आई मानवीय सेवा गर्न पाउँदा मर्नै परे पनि बेग्लै मज्जा मानिरहेको थिएँ ।**

संरचना पनि परिवर्तन भएको छ। स्वतन्त्रताको लागि लड्नु वा मर्नु भनेको असाधरण मान्दैनौं। जतिसक्दो जनसङ्ख्या वृद्धिमा हामी कतै विश्राम गर्न चाहेका छैनौं किन भने, हाम्रो विगत २४ वर्षमा मात्र पुगनपुग ३ लाख मारिएको र वेपत्ता पारिएको थियो। यसको कुनै तथ्यतथ्याङ्क छैन। झनै हाम्रो युद्ध र स्वाधीनताको सवाल तड्कारो बनाउने काममा जुट्यौं, ठूलो अनुरोध र प्रतीक्षापछि संयुक्त राष्ट्र संघमार्फत् जनमत सङ्ग्रह सम्पन्न भएको हो। यहाँको प्राकृतिक साधन, स्रोत पनि धेरै छन् तेल, ग्याँसको भण्डार छ। कफी उत्पादन र चन्दन रुख पनि उल्लेख योग्य निर्यातका समान हुन्। तर यी आय स्रोत पूर्वी टिमोरलाई भएन, इन्डोनेसियालाई मात्र भयो। त्यसैले हामीले जनमुक्ति क्रान्ति छोडेनौं अन्ततः विजय भएका छौं। यस युद्धमा हामीले नराम्रो नरसंहार व्यहोर्नु पर्‍यो। सर आलिसलाई केहीकेही व्यक्तिगत कुराहरु पनि सोधें - उहाँको काका पनि गत नरसंहारमा मारिनु भएछ।

हाम्रो त्यो अप्रेसन टुरको अन्तमा हिरा, जुहारत पाउने आशङ्का गरिएको, राजधानी डिलीदेखि ३५ कि.मि. उत्तरमा पर्ने, अत्यन्तै सानो टापु, आताउरोमा हामी पुग्यौं त्यहाँका मानिस स्वतन्त्रता पाएकोमा खुशी छन्, तर त्यहाँ नरसंहारको कुनै प्रभाव देखिदैन। त्यो टापु आफैमा सुन्दर छ र सबैभन्दा ठूलो नरसंहारमा दुखेको छ।

मानिसदेखि दोस्रो चेतनशील प्राणीमा गनिने डल्फिनको टिमोर समुद्रमा छुट्टै अस्तित्व छ। मानिसदेखि नडराउने, मान्छे लाम लागेर हिंडेको जस्तै समुद्रमा हिंड्ने डल्फिनले, वरिपरि छेकेर माछा मारिखाएको दृश्य प्रत्येक दिन देख्न पाउनु पनि कम रोचक थिएन। मान्छेविना प्राकृतिक अथवा संसार कति अशोभनीय देखिँदो रहेछ, यस अप्रेसनमा प्राप्त अनुभवबाट यो पंक्तिकारलाई तीतो सत्य शिक्षाको रूपमा मिलेको छ। टिमोरको दोस्रो ठूलो सहर मालियाना आफैमा सुन्दर छ, वरिपरि पहाडले घेरेको, बीच भागमा समतल बसेको जमीन, नशा झै कोरिएको ठूलठूला ३ खोलाले त्यस मैदानमा धान फलाउँदो रहेछ। त्यहाँ धान रमाइलो गरी फुलेको थियो, कतै पोटाउँदै थियो। मकै थामी नथामी घोघा च्यापिरहेको, बदाम हुर्केर अल्लारे बनेको थियो, तनेबोडी सप्रिएको फल्न आतुर थियो। तर दुःखको कुरा त्यहाँ समयमा पानी पुगेको थिएन, गोडमेल, मलजल थिएन भनौं हेरचारको अभावमा ज्यादै उराठ देखिन्थ्यो। झार कतै धानको बोटलाई उछिनेर पलाएको थियो। धानको मालिक मानिस भने न घर न डेरा न खान न पान भएर आतम्बुवा गइसकेका छन्। सीमाना क्षेत्र भएकाले झनै गम्भीर खतराहरु अद्यावधि छ। मालियानामा हाम्रो आगमनको केही दिनपछि मानिसहरु जङ्गलबाट घर त फर्के तर उनीहरुसँग बस्ने आफ्नो घर जलाइदिएकोले घर थिएन, खाने थिएन, परिवार छुटेका थिए। विचराहरु ! भविष्य कस्ले जान्दछ र ? यदि पहिले नै जानेको भए विकल्प खोज्थे होला। मलेरियाको उच्च चाप भएका टिमोरमा मानिस बेलुकी चर्चमा भेला हुन्थे,



गीत गाउँथे, गफ गर्थे, सुतौं मच्छडले सुत्न दिन्नथ्यो। त्यसैले उनीहरु त्यसो गर्थे विवश उनीहरु भोको पेट अर्थात् नरिवल मात्र खाएर भए पनि गीत गाउँथे, गफ गर्ने भनौं मच्छडमाझमा विना लुगा सुत्न चाहन्नथे तर हुन्थे ठीक विपरीत गफ गर्दागर्दै गलेर भुतुक्कै नाङ्गै सुतेर थकाई मार्थे निद्रा पुऱ्याउँथे। सौभाग्य चाहीं पहिले नै भगवान्ले हेरिदिए झैं मौसम चाहीँ गर्मी थियो।


*टिमोरी यो घरमा के अव शान्ति छाउला ? जीवन आउला ??*

वास्तवमा पूर्वी टिमोर टिमुर आफैमा एउटा परिचायक शब्द हो। किनकि ‘टिमोर टिमुर’ भनेको ‘पूर्वी टिमोर’ स्थानीय भाषामा भनिन्दो रहेछ। यस टिमोरमा भएको नागरिक नरसंहार धार्मिक प्रेरक होस् वा जातिगत होस् वा स्वतन्त्रताको लागि मात्र भएको होस्। शताब्दीकै अन्तिम स्वतन्त्रतावादी जनमुक्ति पक्षधरले विजय हासिल गरेको एउटा निक्खर इतिहास हो। टिमोरको घट्नाले धेरै पाठ पढाइएको छ। साहित्यमा दुख्न सकिन्छ, मार्क्सवादको विश्लेषण गर्न सकिन्छ, धार्मिक महत्व र जातिय रङ्गभेदको असर जान्न सकिन्छ। वर्गीय समस्या बुझ्न सकिन्छ। आदिवासीको विस्थापित पहिचान पुनःस्थापित भएको साक्षत इतिहास पाउन र जोगाउन सकिन्छ। यो टिमोर टापु अस्ट्रेलियाको उत्तर र इण्डोनेसिया जाभा टापुको पूर्वमा अवस्थित छ। सन् १९५९ मा पूर्वी टिमोर र पश्चिम टिमोर विभाजित हुँदा पोर्चुगलको पूर्वी टिमोर र हल्यान्डको पश्चिम टिमोर उपनिवेश बन्न गयो। सन् १९७५ मा पोर्चुगलबाट स्वतन्त्रपछि “युडीटी र डेमोक्र्यटिक रिपब्लिक अफ इस्ट” बीच आन्तरिक कलहले गर्दा युडीटीले इन्डोनेसियालाई शासनको लागि निमन्त्रणापछि जल, थल र स्थल सेनाद्वारा इन्डोनेसियाको २७ औं प्रान्तमा रुपान्तरित गऱ्यो।

**पूर्वी टिमोर महत्वपूर्ण बन्नतको रहस्य:**

१. टिमोर समुद्र आणविक हतियार र लडाकु जहाज पास गराउने एकदमै राम्रो बाटो हो। भियतनाम युद्धमा यही बाटो प्रयोग भएको थियो। कुनै समय चीन-कोरियासँग युद्ध

हुन गएमा पश्चिममा शक्ति र स्वयम् अस्ट्रेलियाको निम्ति महत्वपूर्ण छ ।

२. यो लडाईंमा हवाइजहाजहरुलाई सस्तो र सुरक्षित तेल भर्ने ठाउँ हुनसक्छ ।

३. छिमेकी मुलुक, पापन्युगिनी, अस्ट्रेलिया, न्युजिल्यन्ड लगायत स्वयम् टिमोर ९१% भन्दा बढी रोमन क्याथोलिक भएकाले संसारको रोमन क्याथोलिकहरुको सहयोग टिमोरलाई छ र सैद्धान्तिक राजनैतिकको लागि राम्रो प्रयोगशाला सावित हुनु ।

४. यसको वैधानिकता पोर्चुगलमा अन्तर्निहित, अस्ट्रेलियाको महत्वकांक्षा, एसियाकै शक्तिशाली मुलुकमध्ये एक इन्डोनेसियाबाट शासित टिमोर र इन्डोनेसियाप्रति पश्चिमेली मुलुकको दोस्रो दृष्टिकोण ।

## पूर्वी टिमोर इण्डोनेसियाबाट पृथक हुन चाहनाको कारण

१. पूर्वकाल मै स्वतः एउटा राज्य, पोर्चुगलको छुटपछि कुटनैतिक धावाद्वारा जवर्जस्ती इन्डोनेसियाको २७ औं प्रान्त बनाइनु ।

२. जातिय रङ्गभेद, धार्मिक रङ्गभेदको आधारमा इन्डोनेसियाद्वारा टिमोरका आदिवासीहरुलाई व्यापक दमन एवम् शोषण । वर्गीय रुपमा थोरै इन्डो पुँजीपतिहरुको हातमा सिङ्गो टिमोरको अर्थतन्त्र अर्थात् आदिवासीलाई कुनै राम्रो अवसर नदिनु केवल कुल्लि मात्रमा सीमित राखिनु ।

३. २७ औं प्रान्तमध्ये सबैभन्दा उपेक्षा र टिमोरको आयस्रोत चाहिँ इन्डोनेसियामा प्रयोग हुनु।

४.इन्डोनेसिया मुस्लिम कट्टर देश र टिमोर चाहिँ ९१ प्रतिशत भन्दाबढी रोमन क्याथोलिक भएकोले धार्मिक असमानता हुनु ।

५.मुक्तिको निम्ति रक्त क्रान्ति हुनु र त्यसले निरन्तरता पाई, आन्दोलनले क्रमशः बाध्यताको परिवन्दमा जानु साथै देशविदेशको प्रभावमा टिमोरी जनतामा स्वाधिनताको बारे ज्ञान हुनु ।

६.अधिकारको सवालमा पनि इन्डोनेसिया सरकारले वेवास्ता गरी राजनैतिक समस्या नसम्झनु

७.सानो क्षेत्रफल भए पनि छुट्टै राज्यलाई अनुकूल भौगोलिक बनावट हुनु ।

८.रोमन क्याथोलिक धर्मको कारण छिमेकी मुलुकबाट सहयोग एवम् पश्चिमी मुलुकहरुको महत्वकाङ्क्षी सरसहयोग हुनु ।

९.अमेरिकी सहयोगको आशा हुनु व्यापारिक दिमागका वी.जे. हवीवीको राजनैतिक संलग्नता हुनु ।

## विगत २४ वर्षदेखिको आन्दोलन,

१. तत्कालीन नेता निकोलाउ लोवातोको सन् १९७८ मा एक आन्दोलनको बेला मृत्यु, उसको ठाउँमा सानानाको छनौट हुनु ।

२. ९० प्रतिशत रोमन क्याथोलिक मुलुकमा सन् १९८९ पोप जोन पोल द्वितीयको भ्रमणमा राखिएको मागको कारण इन्डोनेसियाद्वारा दमन गरिनु ।



३. सन् १९९१ मा स्वतन्त्रताका पक्षपाती २०० प्रदर्शनकारीहरुको हत्या हुनु ।

४. सनाना गुस्माऔलाई राष्ट्रद्रोहको आरोपमा मृत्युदण्ड । अन्तर्राष्ट्रिय दवावको कारण २० वर्ष मात्र जेल सजाय हुनु ।

५. पूर्वी टिमोर स्वतन्त्रताको आवाज उठाए वापत रामोस होर्टा, पादरी कालोसलाई नोबेल शान्ति पुरसर प्राप्त ।

६. संयुक्त राष्ट्र संघ, पोर्चुगल, इन्डोनेसिया र इस्ट टिमोरबीच सन् २३ अप्रिल १९९९ का दिन स्वतन्त्र गर्न सकिने निर्णय हुनु ।

७. संयुक्त राष्ट्र संघका महासचिवले अगस्ट ८ देखि २२ भित्रमा जनमत गराइ इन्डोनेसियाको एक प्रान्त नै रहने कि स्वतन्त्र राष्ट्र बनाउने भन्ने राय २१ जुन १९९९ मा व्यक्त ।

८. ३० अगस्ट ९९ को जनमत संग्रहमा ९९ प्रतिशत मतदानमध्ये पृथकतावादीले ७८.५ र इन्डोनेसिया समर्थक मिलिशियाले २१.५ प्रतिशत मत हासिल गरी भारी बहुमतले पराजय हुनु ।

## पूर्वी टिमोरको घटनाबाट केके पाठ सिक्ने ?

**(क) साधारणतयाः**

१. कसैको आड र निहुँमा राज्य कब्जा गर्नु अपराध हो ।

२. शक्तिशाली मुलुकलाई कमजोर बनाउने षड्यन्त्र अन्य मुलुकबाट हुने गर्छ ।

३. सल्लाह, सहयोग, षड्यन्त्र हुन सक्छ त्यसबेला राज्यप्रति रुष्ट व्यक्ति, समूह आन्दोलनमा उत्रन्छन् ।

४. अन्याय, अत्याचार, दमन जति नै भए पनि अन्तर्राष्ट्रिय मतलब राख्दैन जबसम्म सो क्षेत्रमा उसको सामरिक स्वार्थ गाँसिदैन ।

**(ख) सकारात्मक दृष्टिकोणः**

१. ऐतिहासिक पृष्ठभूमिको आधारमा अस्थिरताको खोज र मूल्याङ्कन हुने गर्छ ।

२. आवेगको कामभन्दा जनताको विवेकीय मतदान निर्णायक हुन्छ ।

३. राजनैतिक दमन लामो समय टिक्न सक्दैन बरु यसले आन्दोलनलाई स्थायित्व दिन्छ।

४. राजनीतिक धरातलमा स्वअस्तित्व पहिचानको लागि आन्दोलन हुने गर्छ ।

५. राजनैतिक स्वार्थ सबैको लागि, सबैले स्वीकारेको हुनुपर्छ ।

६. न्यायपूर्ण आन्दोलनमा आखिर शासन र शासक दुवैले घुडा टेक्छ ।

७. राज्य सबैभन्दा प्यारो हुन्छ, राज्य गुमेमा अस्थित्व स्वत लोप हुन्छ । विस्तारित राज्यले उपेक्षा गर्न सक्छ । अन्ततः स्वाधीनता र अस्तित्वको लागि दमित पक्ष आन्दोलित हुन पुग्छ ।

८. अन्तर्राष्ट्रिय समुदाय अत्यन्तै महत्वपूर्ण हुन्छ, यसको आर्शिवाद र सहयोगमा राज्य जन्मने र गुम्नेसम्म हुन्छ । नाजुक अवस्थामा अन्तर्राष्ट्रिय समुदाय मानवीय सहयोग

गर्न बाध्य हुनुपर्छ ।

९. आर्थिक र भौगोलिक असरमा राजनैतिक प्रभाव हुन्छ ।

१०. देशका लागि न्यायपूर्ण आन्दोलन एक दिन सफल भएर छोड्छ । राष्ट्रिय मुक्ति आन्दोलनमाथि जतिसुकै दमन गरे पनि त्यसलाई निर्मूल पार्न सकिदैन ।

१२. नीति परिवर्तन र वार्ताका माध्यमबाट मात्र पृथकतावादलाई रोक्न सकिन्छ, हिंसाले दवाउन खोजियो भने त्यो अन्ततोगत्वा प्रत्युत्पादक हुन जान्छ ।

सामरिक महत्वसँग जति नजिक राखिन्छ टिमोरलाई अर्थात् विश्व नक्सामा टर्कीलाई रणभूमिको रुपमा जुन दृष्टिकोणले हेरिन्छ झण्डै उस्तै विशेषता र दृष्टिकोण पूर्वी टिमोरले बोकेको छ । वास्तवमा टिमोरिस जनताहरु रङ्गरुप, आकार, साइज, प्रकृति हामी नेपालीसँग खासै भिन्नता छैन । त्यसकारण पनि त्यस नरसंहार रोक्नको निम्ति अग्रपंक्तिमा निडर भई गोर्खालीले टिमोर टेक्नुले इतिहासमा नविर्सने थप आयाम बनेको छ । गोरर्खाली विश्वमै बहादुर त छँदै छ, यस पटक पनि पुनः आफ्नो शक्ति र अस्तित्व त्यहाँ उपस्थित २७ वटाभन्दा बढी बहुराष्ट्रिय सेनाले कानेखुसी गर्दै 'गोर्खाज स्पेसल फोर्स' भन्ने प्रशंसा गराउन बाध्य तुल्याए । कुनै पनि भाषा सजिलैसँग छिटो बोल्न सक्नु गोर्खालीको विशेषता नै हो । साधारण एक गोर्खाज (नेपाली)ले कम्तिमा ६, ७ वटा भाषा बोल्नुले बहुभाषिक गोर्खाली भन्न पनि सकिन्छ । तर चाँडै माया र दया दिनुलाई चाहिँ गोरखालीको कमजोरी नै ठान्नु पर्छ ।

झण्डै ३ महिनाको हाराहारीमा टिमोर अत्यन्तै शान्तिप्रिय देखिन्छ । स्थानीय जनताले सबैभन्दा बढी मनपराएका गोर्खालीको फर्कने मानसिक तयारी भइरहेको हुन्छ । बाटामा हजारौं मान्छे हिंड्ने गर्छन्, सहर धमाधम पुनः निर्माण, सरसफाई धमाधम चलिरहेको हुन्छ । मानौ पूर्ण परिवर्तन भएको छ, डिली सहर होइन स्वतन्त्र र स्वाधीन राजधानी डिली सहर बनेको छ । डिलीमा ट्राफिक भीड बढेको थियो, यत्रतत्र छताछुल्ल छरिएर मान्छेहरु भौतारिरहेका थिए त्यति बेला यस पङ्क्तिकारले छातीमा कालो कपडा सियोले अड्काएर लगाइरहेको देख्यो र जिज्ञासा मेट्न सोधीखोजी गर्दा १२ वर्षका सानो बालकले उत्तर दियो - मेरो बुबा टेक्सी ड्राइभर हुनुहुन्थ्यो । मिलिसिया ग्रुप मोटर साइकलमा आयो । मेरै घरमा मेरै सामुन्ने गोली हानेर मारिदियो । मेरो बाबा मारियो भनेर चिनाउन मलाई यो लगाउन लगाएको हो । सायद परिस्थितिले नै त्यस्तो ल्याउँदो रहेछ, पुरानो लुगा लगाएकी वर्ष ९ की इजा हामी नजिक आउछिन् । कतै तिनले अभिभावक नै खोजिरहेकी थिइन् । सानी बहिनी भनेर बोलाउँदा राम्रो बोल्ने, लज्जावतीपनले झनै सिगारिएकी इजालाई टिमोर समस्याबारे सबै थाहा छ सम्भवत यो परिस्थितिले नै सिकाएको छ । इजा अहिले गिर्जा चर्चमा बस्छिन् उनलाई सोधीखोजी गर्ने मान्छे कोही छैन । कारण उनको बुबाआमा मारिएका थिए । फगत इजा एक्ली बेसहारा टुहरी इजा



। पङ्क्तिकारले अप्रेसन बेला कुहिएर गन्हाउँदै गरेका लासहरु खोल्सामा पनि भेटाएको थियो । हुनसक्छ इजाको बुबाआमाको लाश त्यही पो हो कि ? रगतका आलै छिर्काहरु पनि भेटिए । सायद ती उनकै बाआमाको रगत पो हो कि ? बाटामा, घरमा फूलका गुच्छा राम्ररी सजाइएको हुन्थ्यो, यो किन यसरी भनेर जान्न खोज्दा तेतुम मात्र बोल्ने बूढो बाजेले भन्यो -यो ठाउँ मेरो छोरो मारिएकोले चिनो फूल राखेको हुँ । त्यसरी राखिएको फूलबारे जानकारी भयो । हाम्रो चिहानघारीमा पनि मिक्चिरी फुल फुलेको पाउँछौं अनि यहाँ पनि पाएँ । कतै हामी मृत्यु संस्कारमा पनि पो समान छौं कि उनीहरूसँग ? म सोच मग्न छु ।

पूर्वी टिमोरको त्यो विभत्स दुर्घटनाले सबैलाई दुखाउँछ, हाल झण्डै ९ हजार सैनिक शक्ति राष्ट्र संघमार्फत् कार्यरत छन् भने अधिकांश तयारीमा छन् । जति नै टिमोरको छाती चिरिए पनि यसको स्पष्ट भविष्य किटान हुन सकेको छैन । थोरै जनसङ्ख्या, सानो भूभाग टिमोरमा ठूलो सङ्ख्याको अन्तर्राष्ट्रिय शक्ति अब २ वर्षसम्म रहनेछ । त्यसबेलासम्म जति विकास होला, ठूलठूला विकृति पनि भित्रिने आशङ्का छ । त्यसबेलासम्म वेश्यावृत्ति अधिक बढ्न सक्छ, अन्तर्राष्ट्रिय जगत्मा वेश्यावृत्तिबारे सार्वजनिक रुपमा टिमोर नआउला भन्न सकिदैन । जेहोस् आखिर दिन पङ्क्तिकार सामूहिक यात्रामा सहभागी थियो । त्यस बेला टिमोरको प्रगतिलाई धेरै शुभकामना दिंदै अन्ततः डिसेम्बर ८ तारिक अल्पकालीन निवासस्थान ब्रुनाईतर्फ बाटो लाग्यो । पूर्वी टिमोरलाई सदासदाको लागि छोडेर ।

*- प्रवासी वेदनाका आवाज, वर्ष २ अंक २*

# मेसोडोनियाको मेरो भ्रमण
# र
# दुःखद कथा ब्यथा

अचेल काम र नामले चर्चित एउटा ठाउँ छ, जुन असाध्य अप्ठ्यारो तालमा नृत्य गर्न बाध्य छ; कुन्नि भ्याउरे हो या चुड्के । आकाशमा चन्द्रमाको सानो आकार छँदा पाइला टेकेको आज चन्द्रमा पूर्ण आकारको बनिसकेको छ, खोई गोडा साते'क दिन बितेछन् क्यार !

झण्डै सत्तरी वर्षको बूढो मान्छे, हातमा हँसियाजस्तै घुम्री परेको तर दाँत नभएको खुर्मीजस्तो हतियार लिएर आफ्नो भाषामा, आफ्नै सुर र तालमा हाम्रो नजिक आएर शिष्टाचारको औपचारिकता पूरा गरेर बारीमा भएको ढकमक्क बदाम बालीको




चक्कर लगाई फर्कन्छ । म गेटमा उभिएको हुन्छु । एक हुल केटाकेटी आउँछन् र मलाई उनीहरुकै मेसोडोनियन भाषामा बोलाउँछन् । म उनीहरुको भाषा सिक्न खोज्छु । उनीहरु जिस्काउँछन्, मेरो उच्चारण ठीक भएन भनेर गिज्याउँछन् । केटाकेटीहरुको अर्को हुल आइपुग्छ । अघिल्लो हुल चुपचाप भाग्छ त्यहाँबाट । दोस्रो हुलका केटाकेटीहरु पनि मलाई त्यसै गर्छन् । अल्वेनियाली भाषा सिकाउँदै जिस्काउँछन् ।



हामी त्यहाँ हुनाको विशेष लक्ष्य छ । त्यसका लागि अल्प बसोबास स्थानदेखि ४० कि.मि. कतै त्योभन्दा टाढाटाढा चिनुक, ब्ल्याक हक र सी किङ हेलिकप्टरहरुमा उडेर जान्छौं र तुरुन्तै फर्केर आउछौं । एकजना २२ वर्षे ब्रिटिस साथी Ian Collins, ऊ सानो गाडी चलाउँथ्यो, गाडी चलाइरहेकै बेला हिर्काइएर उसलाई मारियो हिजो मात्र । हामी अधैर्य बनेका छौं । ... कतै निहुँ खोजे जस्तो कतै हाम्रो मुख्य लक्ष्यमा नतमस्तक भए जस्तो ।

"जद्राबो प्रियातेल काकोस्ते ?" हात उठाउँदै एउटा नयाँ अनुहारले बोल्यो । अब मैले के भन्ने ? तपाई भए के भन्नुहुन्थ्यो ? त्यो मेसोडोनियन भाषा थियो । म जवान मान्छे । मसँग केही जोश छ तर आज मसँग धेरै कौतुहलता छ । जिज्ञासा, आक्रोस र केही त्रास पनि । नेपालको गाउँले परिवेशमा हुर्किएर बेलायतको नोकरी गर्न पुगेको मान्छे । नोकरीवाला हुनुको मज्जा नै यस्तै छ ! कहिले कहाँ कहिले कहाँ । एउटै ठाउँमा ढुक्कले तीनचार महिनाभन्दा बढी बस्न नै कहाँ पाइन्छ र ! त्यसो त नोकरीको काइदाफाइदालाई स्वीकार्दै जाँदा तीन दर्जनभन्दा बढी देशहरुको भ्रमण र बाध्यतावस नै भए पनि धेरै भाषाहरुको ज्ञान मेरो निम्ति कम स्मरणीय रहेन । त्यसमा पूर्वी टिमोर, अष्ट्रेलिया, फिजी, क्यानाडा, नेदरल्यान्ड, अमेरिका र वेलिजको प्रतिविम्व मेरो मानसपटलमा ताजै छ । मेरो अगाडि कतै फिजीको जस्तो भूभाग, कतै उत्तरी अस्ट्रेलयाको जस्तो गर्मी, वेलिजको जस्तो जङ्गल र कतै पूर्वी टिमोरको जस्तो चर्को नरसंहारहरु ठिङ्ग उभिन्छन्, मानवीय संवेदनानै हराउने गरी ।

गत भदौ आठ गतेको कुरा हो, ब्रिटेनको तर्फबाट हामी केही प्यारासुट सेना मेसोडोनियाको राजधानी स्कोपेको पिट्राभक एयरपोर्टमा एकाएक उत्रन्छौं । हामी त्यहाँ मानवीय हैसियत र न्यायको निम्ति उपस्थित छौं । हुन त न्यायको

**मेसोडो-नियालीहरु क्रिस्चियन अर्थोडक्स र अल्वेनियालीहरु मुस्लिम धर्ममा विश्वास राख्दछन् । ..वास्तवमा भन्ने हो भने मेसोडोनियाको यो समस्या जातिय, साम्प्रदायिक र धार्मिक असहिष्णुताको समस्या हो ।**

मापदण्ड शक्तिमा निर्भर रहन्छ । वलवानहरु आफ्नो शक्तिअनुसार जे गर्नुपर्ने गर्छन् र निर्धाहरु लुरुलुरु स्वीकार्छन् ।

मेसोडोनिया स्वतन्त्र सार्वभौम सम्पन्न छुट्टै राष्ट्र हो । एक दशकअघि पूर्वी युगोस्लाभियामा कम्युनिस्ट सत्ताच्युद भएपश्चात टुक्राटुक्रा बन्न पुगेको युगोस्लाभ राज्यहरुको एउटा सानो छुट्टै राज्य हो मेसोडोनिया ।

राजतन्त्रात्मक मेसोडोनियाली इतिहासमा राजा फिलिप र उनका छोरा अलेक्जेन्डर नविर्सने नाम हुन् । त्यस्तै मार्सल टिटोलाई पनि उल्लेख गर्नैपर्छ । यो देशमा धेरै उतारचढावहरु आए । सन् १९९२ मा मेसोडोनिया ग्रीस र बुल्गेरियाबाट छुट्टियो । पछि सन् १९९१ सेप्टेम्बरमा युगोस्लाभियाबाट पनि स्वतन्त्र भएपछि यो देश सार्वभौम सम्पन्न हुन पुग्यो । यसका छिमेकी मुलुकहरु बोस्निय र कोसोभोमा घटेका घटनाहरुबाट पनि पाठ सिक्नुपर्नेमा झनै आक्रोसित बन्न पुग्यो मेसोडोनिया । हाम्रो देश नेपालभन्दा झण्डै छ गुना सानो यो देशको भूगोल झण्डै हाम्रो पहाडी गाउँघरहरु जस्तै छ र राजधानी स्कोपे हाम्रै काठमाडौं उपत्यका जस्तै र नेपाल जस्तै भूपरिवेष्टित पनि । अल्वानिया, ग्रीस, सर्विया र वुल्गेरियासँग सिमाबद्ध यो देशको मुद्रा दिनार हो र प्रतिव्यक्ति आय १०५० अमेरिकी डलर रहेको तथ्याङ्क छ । कलकारखाना र कृषि मुख्य व्यवसाय भए पनि मुख्य आधार भने कलकारखाना नै हुन् । शिक्षा र औसत आयु अत्यन्तै राम्रो स्थानमा छ । यहाँका मान्छेहरुको रङ्ग, रुप र बनावट गोराहरुको जस्तै छ । हिजोआज यहाँ चैतवैशाखजस्तो सुख्खा याम छ । दिउँसो २९ देखि ३३ डिग्री सेल्सियससम्म तापक्रम । हिउँदको समयमा भने बाक्लो हिउँले ढाक्ने गर्छ । कुल २० लाख जनसंख्यामा ६५ प्रतिशत मेसोडोनियाली, २२ प्रतिशत अल्वेनियाली र बाँकी अरु छन् । मेसोडोनियालीहरु क्रिस्चियन अर्थोडक्स र अल्वेनियालीहरु मुस्लिम धर्ममा विश्वास राख्दछन् ।

वास्तवमा भन्ने हो भने मेसोडोनियाको यो समस्या जातिय, साम्प्रदायिक र धार्मिक असहिष्णुताको समस्या हो । औसतमा विकसित मुलुकभित्र पर्ने यस देशका जनताहरु सभ्य छन् तर आपसमा युद्ध गर्छन् । अब भन्नुहोस्, सभ्य भइसकेपछि समान अवसर र अधिकारको निम्ति युद्ध गर्नुपर्ने रहेछ भन्ने बुझ्ने कि मुर्खभित्रको मूर्खता भन्ने ? मेसोडोनियाको कथा यति गज्जवको छ कि, सानो नानीलाई कानमा निमोठी दिएर रुवाउने अनि उसकी आमाको अगाडि चाहिँ मिठाई दिएर फकाउने ! अथवा आफै बोक्सी आफै धामी भएको नाटो र अमेरिकाको खेलौना मेसोडोनिया लाचार र विवश छ । यहाँका वर्तमान राष्ट्र प्रमुख बोरिस टर्केस्कोभ र प्रधानमन्त्री लुढजु गर्गेभ्स्कीको जम्मा २६ सदस्यहरु रहेको मन्त्रिमण्डलमा पुलिस, सेना र प्रशासनमा अल्पसंख्यक अल्वेनियालीहरुको खासै प्रतिनिधित्व छैन । त्यसै कारणले मानव पतनको चरम जनजातिमा पुगेका अल्वेनियालीले यिनै शोषण, अन्याय, अत्याचार र दमनको विरुद्धमा तमाम् मोर्चाबन्दी



गरी राष्ट्रिय मुक्ति सेना (National Leberation Army/ NLA) ले कठोर विद्रोह गरेका हुन् । सरकारी पक्षबाट आतङ्ककारीका रुपमा आरोपित एन.एल.ए. मुक्ति सेना प्रशोभसँग जमिन र हवाई दुवै युद्धपोतहरु छन् । अधिकार मागेर होइन, खोसेर लिनुपर्छ भन्ने भनाइलाई चरितार्थ बनाउने यी अल्वेनियालीहरुलाई मुक्ति युद्ध लड्नको लागि यतिविघ्न शक्ति कहाँबाट प्राप्त छ ?

छिमेकी राष्ट्रहरु ग्रीस, सर्विया र बुल्गेरिया अर्थोडक्स धर्मप्रधान मुलुकहरु हुन् भने अल्वेनिया मुस्लिम राष्ट्र भएकोले प्रत्यक्ष आशिर्वाद अल्वेनियाबाट मिलेको छ । अल्पसङ्ख्यक अल्वेनियालीहरुको मुख्य बसोबास राज्यको पश्चिमोउत्तर इलाकामा पर्दछ । प्रशासनिक हिसावमा ३४ भागमा विभाजित क्षेत्रमध्येको टेटभो, गोस्तीभार, किसिभो, कुभानोभले सर्बिया र अल्वेनियालाई जोडेको छ । यी क्षेत्रहरु विशेष गरेर प्रभावित क्षेत्रहरु हुन् । यतिसम्म कि एक पक्ष अर्को पक्षको गाउँमा गएर बलात्कार गर्ने, अपहरण गर्ने, कुटपिट गर्ने र मार्ने गर्दछन् । यहाँको निम्ति मार्नु, मर्नु र हतियार चलाउनु साधारण बनिसकेको छ, दैनिक जीवनका नित्यकर्म जस्तै । हजारौं मानिस शरणार्थी भएर अन्तै पुगेका छन्, आफ्नो मातृभूमिसँग वियोगको घाउ मुटुभरि बोकेर । देशको ९२२ कीमी रेल्वे सेवा विनायात्रु चल्नु परेको छ । खाली रेल देखेर लाग्न सक्छ के सबै जनता सकिएकै हुन त युद्धको विभीषिकाले ? राजधानीका जनता सबै शंसकित छन् ।

...हजारौं मानिस शरणार्थी भएर अन्तै पुगेका छन्, आफ्नो मातृभूमिसँग वियोगको घाउ मुटुभरि बोकेर ।


मेसेडोनियाली जनता आफ्नो मौलिक पहिरनमा

आंशिक रुपमा अफगानिस्तान, वोज्निया, क्रोएसिया, साउदी, यमन, जर्मनी, ब्रिटेन र अल्वेनियाका भूतपूर्व सैनिक, अर्धसैनिक समेत अप्रत्यक्ष रुपमा संलग्न रहेको यस राष्ट्रिय मुक्ति सेनालाई एउटा मुस्लिम मोर्चा

● ... किन पूर्वी टिमोर पृथक रहन्छ ? किन फिजीको प्रधानमन्त्रीलाई विद्रोही नेता जर्ज स्पाइटले थुन्छ ? बोस्नियामा किन कुखुरा बाखाझैं निर्दोष जनता मारिन्छन् ? चेचेनिया किन ध्वस्त हुन्छ ... ? ●

मान्न सकिन्थ्यो तर नाटोले यसलाई नै हुर्काउने बढाउने र चढाउने गराउनुमा भने अझ गहिरो रहस्य लुकेको देखिन्छ। हुन त साम्राज्यवादी नाटो र अमेरिकालाई युगोस्लाभ कम्युनिस्टहरुलाई हटाउनु र हराउनु थियो । जब त्यो शक्ति हट्यो तब उसको इरादा पूरा हुनुपर्ने थियो त्यो भएन किन । त्यसो भए एउटा बहानामा अर्कै स्वार्थ लुकेको थियो त ? यो अनुतरित प्रश्न हो।

भनाइ छ 'सोझो औंलाले घिउ आउँदैन।' सायद त्यही हुँदैछ। यो शक्तिको संसार आपसमा फुटाउ र शासन गर भन्ने नियम यहाँ मेसोडोनियामा अप्रत्यक्ष लागू हुँदैछ ।

बहुदलीय जनतन्त्रको एक नकारात्मक पक्ष पनि यहाँ देखिएको छ। त्यो के भने यहाँ सर्भ, टर्किस, अल्वेनियाली र रोम समुदायका गरी जम्मा ५० भन्दा बढी राजनीतिक पार्टीहरु छन् । यिनीहरु आपसमा नै खिचातानी गर्दछन् र देश दिनानुदिन बर्बादीतिर धकेलिँदैछ। ऐतिहासिक रुपमा पनि महत्वपूर्ण रहेको मेसोडोनियामा घटेको यो घटना आज वर्गीय चरित्रका पुजारीहरुको निम्ति अत्यन्तै राम्रो पाठ हो कारण वर्गको समस्या समाधानसँगै जातीय समस्या आफै समाधान हुन सक्दैन। वर्ग र जाति यी दुवै शक्ति हुन्। मानिस जन्मदैमा जात लिएर जन्मन्छ वर्ग हैन त्यसैले समस्यामा जात जेठो हुनु स्वाभाविक हो ।

वर्तमान विश्व यति सुन्दर छ कि अमेरिकामा भोकमरी लागेमा जापानमा तयार गरिएको खाना उपलब्ध हुन्छ। क्यानडामा महामारी फैलिए सिङ्गापुरको औषधि पुऱ्याइन्छ । अब भन्नुहोस् कति राम्रो छ हाम्रो आधुनिक संसार ! कति राम्रो छ हाम्रो मानवीय सम्बन्ध ! अनि  हामी कति भाग्यमानी छौं । कति धेरै फड्को मारेको छ भौतिक प्रगतिले ! तर किन पूर्वी टिमोर पृथक रहन्छ ? किन फिजीको प्रधानमन्त्रीलाई विद्रोही नेता जर्ज स्पाइटले थुन्छ ? बोस्नियामा किन कुखुरा बाखाझैं निर्दोष जनता मारिन्छन् ? चेचेनिया किन ध्वस्त हुन्छ ? श्रीलङ्काको जाफ्ना प्रायद्वीपमा तलिम टाइगरहरु किन लडछन् सरकारसँग ? नोर्दन आयर ल्यान्डमा किन समस्या बढ्छ ? मध्यपूर्वमा किन यतिबिघ्न नसंहार ? किन अल्वानियाली नेता अलि अहमद र सकोली स्वयम् हतियार बोक्छन् ? के तिनीहरुसँग विवेक छैन ? के तिनीहरुमा मानवीय संवेदना छैन ? के तिनीहरु सुख शान्ति र प्रगति चाहँदैनन् ? यी प्रश्नहरु गम्भीर हुन्। मोही माग्न जाने ढुङ्ग्रो लुकाउने संस्कृति हामी लेखक र नेताहरुमा छ। यो विकृति हो र कमजोरी पनि हो। आज जात र धर्मको विषय अत्यन्तै गम्भीर प्रकृतिका कुराहरु हुन् । सारा गृहयुद्ध युद्धमा पुग्नाको कारण कतिपय यसैको परिणाम हो । नास्तिक मनस्थितिले भौतिकवादी बनेर सोच्ने हुनु नै विडम्वना हो। रोग नलाग्नु राम्रो हुन्थ्यो तर लागिहाल्यो अब के गर्ने ? म स्वस्थ नै छु भनेर अटेर गर्नुभन्दा औषधिको प्रयोग गर्न सिक्ने र सिकाउने काम राम्रो हो। यथार्थमा मेसोडोनियाको विराम यही हो र त्यसमा बोक्सी र धामी थपिएका मात्र हुन् ।

नाटोको उपस्थितिमा गत अगस्ट १३ तारिख सम्पन्न शान्ति वार्तामा सरकार विद्रोही नेता तथा यहाँका ठूलठूला ४ पार्टीका प्रतिनिधिहरु सहभागी थिए। समग्रमा ९ बुँदे कार्यक्रम अगाडि सारिएपछि नेटोको तर्फबाट जर्मनी, स्पेन, नेदरल्यान्ड, फ्रान्स, बेलायत, इटाली, ग्रीस, नर्वे, टर्की, हंगेरी र चेक रिपब्लिक गरी ११ वटा देशका ३५ सय शान्ति सेना तैनाथ छन् ।

राजधानी स्कोपेमा बिघ्न ठूलो समस्या नभए पनि टेटभो, गोस्टिभार, किसिभो, कुमानोभ भन्ने ठाउँहरुमा मेसोडोनियन र अल्वेनियाली दुवै पक्ष नेटोप्रति आक्रोशित छन् । स्वेच्छाले सुम्पेका हतियारहरु बटुल्न जाँदा जनआक्रोसको कारण फर्कनु पर्ने हुन्छ। एक केटाकेटीको हुलले अर्को हुललाई पिट्ने गर्छन्। स्वाधीनवादी मेसोडोनियाली, अल्वेनियाली जनताको लागि नाटो एउटा अरुचिको गाँस नै भएको छ। त्यसैले गाह्रै छ नाटोलाई प्रतिष्ठा बढाई फर्कनलाई। नाटोको सहयोग षडयन्त्र नै भएको छ यस देशको जनतालाई । यस्तै छ हिजोआज बल्कन मुलुक मेसोडोनियाको युद्ध जुहारी ।

*(पर्वते मासिक, नोभेम्वर २००२)*

# गाँजा सेवन र वेश्यावृत्ति वैधानिक भएको देश नेदरल्यान्ड भ्रमण र यथार्थ

मेरो सहयात्री साथीले वर्णन गर्दै थियो- यो देश साइकल नै साइकलको देश रहेछ, अर्कोले थप्दै थियो यो देश आलु र मकैको देश हो । आलु र मकैको सामु कसैको केही लाग्दैन । अरु भन्दै थिए, सामुद्रिक राजको फूलबारी हो । त्यहाँ त्यस्तै हुन्छ, आलुको अर्को फुजी पहाड बनाउँछु भने पनि हुन्छ । त्यहाँका मकै बारीलाई अर्को चारकोसे झाडी घोषणा गर्छु भन्दा पनि हुन्छ । मकैहरू सबै उन्नत जातका पोथी मकैहरू छन् । आफ्नो बोटको आकार खासै ठूलो नभए पनि प्रतिबोट २ वा ३ घोगा फल्छ । एक घोगा वा फल्दै नफल्न जान्दैन । त्यहाँ सबै काम मेसिन अर्थात् अत्याधुनिक कृषि औजारद्वारा गरिन्छ । यद्यपि त्यहाँ आलु मकै छरेर हुर्काउनुभन्दा पाकेको बाली भित्राउनु गाह्रो हुन्छ, म महसुस गर्छु, किनकि यति बिघ्न फल्छ त्यहाँ हामी सोच्नसम्म सकेका हुँदैनौं । मानिसहरु अत्यन्तै परिश्रमी, फर्साइला भए पनि अन्य युरोप मूलका भन्दा धेरै नैतिक हैसियत सम्झने र लज्जावतीपनले बढी सिँगारिएका हुन्छन् । सुहाउँदिलो, निश्चल र पवित्र भावनाले युक्त हुन्छन् । त्यहाँ काला, सेता, अग्ला, होचा, युरोपियन, एसियाली, अफ्रिकन सबै क्षेत्र र वर्णका मानिस पाइन्छन्, एउटा मानव जातिको सङ्ग्रहालय जस्तै ।

म गाउँघर, परिवार र देशलाई अगाध माया गर्ने मान्छे तर संयोग भनौं या दुःखको कुरा पोखूँ विगत आधा दशकदेखि प्रवासी वेदनालाई व्यहोरिरहेको व्यक्ति, कहिले कठ्याङ्ग्रिने जाडामा काँपिरहने, कहिले गर्मीमा अत्तालिन पुग्ने म यसपटक भने जाडो पनि बढी नभएको गर्मी पनि धेरै नभएको औसत अति उत्तम मौसममा नेदरल्यान्ड अर्थात्



होल्यान्ड पुग्ने सौभाग्य मिल्यो । रातो मीठाई गुलियो हुन्छ त्यो मलाई थाहा थियो तर यसपटकचाहिँ अन्य राष्ट्रभन्दा पृथक पहिचान बोकेको नेदरल्यान्डले बेग्लै गुलियोको अनुभूति दिलायो ।

आफ्नो पेसाको सिलसिलामा हामी जम्मा ४ वटा देशका मानिस मिलेर पेसेवर संयुक्त तालिममा झण्डै २ साताभन्दा बढी सरिक रह्यौं । भाषा, संस्कृति, जात, क्षेत्र तथा पहिचान असमानताको कारण हामीलाई काम गर्न जति अप्ठ्याराहरु हुन्थे त्यति नै कौतुहलता, जिज्ञासा र रमाइलो पनि हुन्थ्यो । हामी कतिबेला नेदरल्यान्डमा हुन्थ्यौं कतिबेला छिमेकी बेल्जियममा पुग्थ्यौं पत्तै हुन्नथ्यो । भनौं त्यहाँ सीमानामा खासै कुनै जाँचपासको व्यवस्था छैन । उक्त तालिम Multi National Dividsion (MND) अन्तर्गत चलेको थियो । बेलाबेला आपसमा भेटघाट गर्ने दुःख, सुख, संस्कार, संस्कृति तथा विचार आदानप्रदान गर्ने उपयुक्त समयहरु मिलाइएका थिए । जर्मनी, बेल्जियम, नेदरल्यान्ड र बेलायतीको जमघटमा हामीलाई गोर्खाज भनेर राम्ररी चिन्दथे र विशेष चासो राख्दथे । मैले इतिहासमा पढेको छु, टेलिभिजनमा हेरेको छु, त्यसैले म सधैं तपाईहरुलाई सम्मान गर्छु भनेर समकालीन जर्मनी साथीले पहिलो भेटमै उनको दृष्टिकोण खोलेका थिए, हामी गोर्खालीको बारेमा । हाम्रोबारेका यी प्रशंसा विश्वकै अधिकांश मुलुकमा दोहोरिने गर्छन् । वास्तवमा म नेपाली हुँ, सगमारथाको देशको नागरिक हुँ भन्दा नचिन्नेहरु म गोर्खाज हुँ भन्दा तर्सने गर्छन् । जब गोर्खाली हुँ भन्ने परिचय दिइसकेपछि नेपाली हुँ भन्दा विश्वास नै गर्दैनन् । नेदरल्यान्डको राष्ट्रियता डच भए झैं नेपालको राष्ट्रियता गोर्खाली पनि त हुन सक्थ्यो होला । उनीहरुले तर्क गर्न सक्थे तर होइन उनीहरु त गोर्खाज भन्ने देश नै खोज्छन् । विदेशीहरु हामी गोर्खालीलाई गोर्खाज भन्छन् र खुकुरी भन्ने शब्द गोर्खाजसँगै जोडेर ल्याउँछन्, अनि राइफलको मार



नेदरल्यान्डको आर्नम ब्रिज, जहाँ दोस्रो विश्व युद्धमा आठहजार भन्दा बढी ब्रिटीसलाई जर्मनीले मारेका थिए ।

गर्न सक्ने क्षमता रेन्ज सम्भेभैं खुकुरीको खतरा रेन्ज सोध्छन्, अब हामीले उत्तर के दिने ? यो समस्या पृथ्वी कै सुदूर दक्षिण पूर्व टोङ्गा, फिजी, अस्ट्रेलिया, न्युजिल्यान्ड, पूर्वी टिमोर , ब्रुनाइ, मलेसिया, थाइल्यान्ड, सिङ्गापुर, श्रीलङ्का, बेलायत, वेलिज, जर्मनी पुग्दाखेरीको पनि हो । त्यसैले मेरो लागि यो पुरानै समस्या हो । यी कुरा जब दर्साएँ तब नेपालको पर्यायवाची गरिबीको देश भन्नुको सट्टा वीर गोर्खाजको देश भन्न थालैं । तालिम चलिरहेकै थियो -हाम्रो काम प्यारासुट गर्ने भएकोले धेरै उचाइको आकाशमा उड्ने जहाजबाट कहिले नेदरल्यान्ड कहिले बेल्जियममा उत्रने गर्थ्यौं । त्यो स्वभाविकै थियो तर त्यहाँ समतल भूभाग, उब्जाउशील भूमिले भने अत्यन्तै मन लोभ्याउँथ्यो ।

नेदरल्यान्ड क्षेत्रफलको आधारमा सानो छ तर यसलाई उत्पादनको निम्ति ठूलो भण्डार मान्नैपर्छ । त्यहाँका भूसतह समुद्र सतहदेखि पनि गइराइमा भएको कुरा विज्ञानले बताएको छ । खुल्ला चौरी र जङ्गल अत्यन्तै रमाइलो देखिन्छ । विशेष गरेर गाई पालन अत्यन्तै धेरै पाइन्छ । त्यसैकारण त्यहाँ दूध पानीकै सट्टा पिउने अवसरै मिल्यो । गाईहरु सेतो, कालो, टाटेपाङ्ग्रे आकर्षक रङ्गका हुन्छन् भनौं नेदरल्याण्ड गाईको निम्ति स्वर्ग हो । एमनेन्टीले अद्यावधि कतिपय मुलुकमा मान्छेलाई बाँध्ने गरेको कुरा यदाकदा मानवअधिकार उल्लङ्घन शीर्षकमा उल्लेख गरेको पाइन्छ तर नेदरल्यान्ड अर्थात् अन्य मुलुकका पशुलाई समेत बाँधिन्न । सायद त्यहाँको गाईको जुनी एउटा उत्तम जूनी हुनुपर्छ ।



*हावाद्धारा चल्ने नेदरल्याण्डका वीड्मिल धेरै लोकप्रिय छ ।*

यो देश रानी द्वारा शासित राज तन्त्रात्मक मुलुक हो । यसका छिमेकी मुलुक जर्मनी, बेल्जियम र बेलायत हुन् । त्यहाँका मुद्रालाई नेदर ल्यान्ड गिल्डर्स भनिन्छ भने राजधानी आम्सड्रम हो । यस देशका मुख्य आय स्रोत पेट्रोलियम पदार्थ उत्पादन, फल फूल निर्यात र खाद्यान्न नै हुन् । नेदरल्यान्डका डचहरुको आफनै भाषा पहिचान छ । तर नेपालमा हिन्दी गीत संगीत फिल्मको कारण हिन्दी भाषाले प्रभुत्व कायम गरेभैं त्यहाँका जनजिव्रोमा अङ्ग्रेजी गीत संगीत सजिलै भुण्डिएको पाइन्छ । रोमन क्याथोलिक प्रधान नेदरल्यान्ड (होल्यान्ड) इतिहासमा पनि महत्वपूर्ण मानिन्छ । दोस्रो विश्वयुद्ध सन् १९४१ को सेप्टेम्बरमा अर्नाम (Arnam) नदीको पुल कब्जा गर्ने होडमा हिटलरका जर्मन सिपाही विरुद्ध ब्रिटिस, अमेरिकी, क्यानाडा र पोल्यान्ड लडेका थिए । भ्रुण्डै हप्ता दिनसम्म चलेको अप्रेसन मार्केट गार्डेन (Market Garden) मा अङ्ग्रेजका शक्तिशाली प्यारासुट १० हजार सिपाहीमध्येमा ८ हजार त्यही पुल नजिक मारिएका थिए भने त्यस अप्रेसनमा भ्रुण्डै २० हजारभन्दा बढी सिपाही मारिएका थिए । ऐतिहासिक पृष्ठभूमिले मानिसलाई डोऱ्याउँदोरहेछ । सायद त्यही भएर होला आज पनि डच जनता दुब्ने गर्छन् ।

पृथ्वी सुन्दर छ, मानिस स्वतन्त्र जन्मन्छ भन्ने उक्ति राजधानी आम्सड्रमको सौन्दर्यताले दर्शाउँछ । हिउँदको समय त्यहाँका नदीनाला सबै वरफमा बदलिन्छ, जमेको त्यस वरफमाथि खेल्नु भ्रनै रमाइलो हुन्छ । विश्वका अधिकांश मुलुकमा मात्र अत्याधिक प्रयोगमा ल्याइने साइकल त्यहाँ ठूलो संख्यामा चलाइन्छ । गाडीको रोड दाहिनेपट्टि चलाइने भए पनि प्रत्येक सडकको दाहिने देब्रेमा साइकलको बेग्लै बाटो बनाएको पाइन्छ । त्यसैले त्यो देश साइकलको देश हो, फलफूलको पनि देश हो । सहरका आवासहरु राम्रा र सुन्दर छन् भने २४ घण्टै अँध्यारो हुने रेडलाइट क्षेत्रहरु यूरोपकै अग्रस्थानमा आउने ठाउँहरु पनि छन् । होल्यान्डमा विदा(Holiday) मनाउन आउनेको ठूलो भीड हुनाको कारणमध्ये भौगोलिक सौन्दर्यता त छँदैछ, धेरै सस्तो ठाउँ अनि व्यवस्थित स्वतन्त्र खुलमखुल्ला रेडलाइट क्षेत्रको व्यवस्था हुनु पनि हो । त्यहाँ निश्चित क्षेत्रमा वैधानिक रुपबाटै गाँजा, चरेस खान पाउने छुट छ भनौं स्वतन्त्र शब्दलाई व्यवहारमा ल्याइएको मुलुकमध्ये नेदरल्यान्ड एक हो ।

जिन्दगी एउटा यात्रा हो, अनि जिन्दगी एउटा भ्रम पनि रहेछ । गत १७ सेप्टेम्बर , २००० को मेरो यात्रा वास्तवमा दोस्रो विश्वयुद्धताका मृत्यु भएका तमाम प्यारासुटका वीर योद्धा शहीदहरुको चिरआत्मालाई शान्तिको लागि गरिने भव्य वार्षिक श्रद्धाञ्जलि कार्यक्रममा सहभागी हुनु र बहुराष्ट्रिय उच्चस्तरीय सैनिक तालिममा सरिक रहनुथियो । तिनै दिनहरुका स्मरणमा मैले त्यहाँ जे गरें जे देखें, त्यही मैले यहाँ लेखें अथवा यसो भनौं मैले बाचें ।

*-कोल्चेस्टर*

*१८ अक्टोबर, २०००*

# बेलिजको नव वर्ष

यसपटक नव वर्षको पहिलो दिन सधैंभन्दा अलि फरक महत्वको रह्यो। त्यहाँ नव पालुवा, नव वसन्तको आगमन थिएन। बरु समुद्रको छालहरु मच्चीमच्ची उठिरहेका थिए। बतास आफ्नै गतिमा हुइँकिरहेकै थियो। समय आफ्नै रफ्तारमा चढ्ने-झर्ने भइरहेकै थियो। त्यहाँ हिमालले लाली छरी हाँसेको थिएन, डाँफेले नव वर्ष भनी नाचेको थिएन, पूर्वको भेडेटार र उत्तरपानी डाँडा प्रायःप्रायः सुनसानै थियो। तम्मर आफ्नै वेगमा छचल्किँदै सुसाइरहेको थियो। तर, धरानबाट उकालो हिले धनकुटा जाने बस, ट्याक्सी खासै खचाखच थिएनन्, बरु क्षितिजमा देखिने सूर्यास्तको लालीम्य किरणले सूर्योदय बिहानी ल्याइरहेको थियो।

म चाडपर्वभन्दा उत्सव बढी मन पराउने मान्छे। यस पटक अघिल्लो वर्षको रमाइलो नव वर्षलाई मेरो आँखाअगाडि प्रतिविम्व खिचिरहेको हुन्छु। मेरा एक साथीको लेखबाट म ज्यादै प्रभावित थिएँ। त्यस लेखले उत्सव मनाउँदा ठूल्ठूला हर्षबढाइँ गर्दै ठूलो खर्च गर्नुपर्दैन बरु त्यस दिन उत्सवको नाममा एउटा असल पुस्तक पढ वा चाहे सानै किन नहोस एउटा राम्रो कामको थालनी गर त्यो पनि उत्सव मनाउनु हो भन्ने सन्देश बाँडेको थियो। हुन त, म मेरो देश, परिस्थिति सम्झेर गरिब छु, दुःखी छु, निर्धो, दुब्लो छु, लाचार छु कहिल्यै भन्दिनँ। मेरो वर्तमान पृष्ठभूमिलाई नियाल्दा वीर गोर्खालीसँग रातो, आलो साइनो छ। मलाई शान्तिका लागि विश्वका कुनाकुना पुग्ने बुद्धको शान्तिदूत भने पनि हुन्छ, मलाई पहिलो, दोस्रो विश्वयुद्ध र अन्य हजारौं युद्धमा आफ्नो पसिना र रगतले संसार सिञ्चित गर्ने वीर पुर्खाको सन्तान भने पनि हुन्छ। मलाई घुमन्ते, फिरन्ते प्रकारको जाति सम्झे पनि हुन्छ, किनकि मेरो पेसा र विवशताले विश्वको २ दर्जन देशहरु घुम्नु पर्‍यो मैले, घुम्नु पर्छ मैले। देश घुम्ने र पुग्ने सवालमा वातावरण र सङ्गतको वानी सल्कने गरेको छ मलाई, त्यही चक्करमा इण्डोनेसियाको वाली, थाइल्यान्डको पत्‍या, फिजीको मटेल, बेलायत, नेदरल्यान्ड, क्यानडा, अमेरिकाको होटल हुँदै पुनः बेलिज र मेक्सीकोको मटेलमा पुर्‍यायो, मेसोडोनिया र अस्ट्रेलियासँग पनि टाढा



हुन कहाँ सक्थें र! मेरो स्वभाव र अवसर मिलेको छ, मलाई घुमन्ते फिरन्ते जस्तै शब्दले जे भने पनि हुन्छ, मलाई स्वीकार्य पनि छ किनकि ३,४ महिनाभन्दा बढी ढुक्कले एकै ठाउँ एउटै देशमा तपाईंको कसम बस्नै पाएको छैन। यस्तो घुमफिरसँगको कामले कहिले वरागी पो हुँ कि, बेवारिसे पो हुँ कि ? अर्थात् म को हुँ भन्ने प्रश्नले जिस्काइरहन्छ। स्वयम्मा प्रश्नोत्तरित यी जिस्काइभित्र कहिले कुनै पनि समय भावना बग्छ र आत्मा रुन्छ कसै नथामिने गरी तर सधैं रोएर पनि त साध्य छैन, होइन र!

स्वदेशदेखि बेलायत, क्यानडा, अमेरिका हुँदै बेलिजमा आइपुगेको केही समय बितिसकेको थियो। बेलिज आफैमा स्वतन्त्र सम्पन्न सानो आकारको सार्वभौम राष्ट्र हो। यस देशको राजनैतिक, आर्थिक, शैक्षिक, सामाजिक जस्ता यावत कुरालाई छोडेर भन्ने हो भने बेलिजलाई समुद्रकी परी भने पनि हुन्छ। अनि जङ्गलको राजा। बेलिजका केही सामुद्रिक टापुहरू स्वर्गभूमिझैं अत्यन्तै सुन्दर छन्। यदि हत्केलामा ग्लोब घुमाउनु हुन्छ भने बेलिज सेन्ट्रल अमेरिकाअन्तर्गत पर्दछ। अझ नियालेर हेर्नु हुन्छ भने सुन्तला अकारको पृथ्वीमा नेपालको ठीक विपरीत भाग मेक्सिको पर्न जान्छ, र मक्सिकोको छिमेकी मुलुक बेलिज हो। यहाँका मानिस हुबहु नेपालीजस्तै छन्। रङ्ग, रुप, वर्ण, आकार प्रकार, बानी व्यहोरा, व्यवहारलगायत उनीहरुको खाना र स्वाद पनि उस्तै मिल्दोजुल्दो छ। अझ वृहत् रुपमा हेर्दा संसारका भू-मध्यरेखीय इलाकाका मानिस सबै साना छोटा र मङ्गोलियन वर्णका नै देखिए। अझ बेलिजियन मेक्सिकन हेर्दा उनीहरुलाई मङ्गोल नभनी हामीलाई पो सेन्ट्रल अमेरिकन भन्नु पर्ने हो कि जस्तो भ्रममा पर्नु स्वभाविक भएको छ। भू-मध्य इलाकाका ब्रुनाइ, मलेसिया, सिङ्गापुर, इन्डोनेसिया, थाइल्यान्ड, जापान आदि देशका मान्छे भन्दा फरक बेलिजियन छैनन्। तर उल्लेखनीय सङ्ख्यामा



*बेलजको प्रसिद्ध ब्ल्यू हल जुन प्रमुख पर्यटकस्थलमध्ये एक हो*



*यी नानीका हाँसोसँगै बेलिज मुस्काउँछ*

काला जातिहरु पनि नभएका होइनन् । मनमा ज्यादै कुतूहलता, उत्सुकता, खुसी उमङ्ग मानौं जिउ छ्याङ्ग, हलुङ्गो, फूर्तिलो थियो। मन गद्गद् अनि काउकुती र अबोधपना पहिलो रजस्वलाझैं थियो । ओछ्यानबाट चाँडै बाहिर निस्की बिहानीको नित्य कर्म सकी साथीको कोठामा गई 'गुडमर्निङ्ग'को सट्टामा 'ह्यापी न्यु यर' नव वर्षको शुभ-कामना बाड्दै बिहानीको शिष्टाचार पूरा गरें । म लगायत केही साथीहरु सेन्टजर्ज टापुमा एडभान्चरलाई २ दिनअघि पुगेका थियौं । सेन्टजर्ज पूर्व प्रधानमन्त्रीको नामबाट राखिएको नाम हो भने बेलिजको एकमात्र धनीमानीहरुको विदा मनाउने ठाउँ पनि हो । अन्य किकोका र सानप्राधो, डायग्रा टापुको सुन्दरताबारे जति वर्णन गरे पनि कमै हुन्छ । त्यस दिन केही साथीले वीङ सर्फिङ शुरु गरे केही स्नोक्लिङ र कोही ड्राइभिङ तर मेरो चाहिँ पालो घुमफिरको थियो । त्यसैले मचाहिँ केही साथीसँग धेरै टाढा पर्ने किकाका र सानप्राधो घुमेर नव वर्ष मनाउने योजनाअनुसार राजधानी सहर बेलिज सिटीबाट बोट ट्याक्सी झिःकाई क्षितिजलाई नै छिचोल्ने गरी समुद्रको बीच भाग हुँदै, पर्यटकीय टापुहरुतर्फ हानिएँ । जति बोट ट्याक्सीको गतिले गर्दा हावाले शीतल ल्याएको अनुभव हुन्थ्यो त्योभन्दा बढी बेलिजको घामले अनुहार पूरै डढाइसकेको हुन्थ्यो, त्यो पत्तै हुन्नथ्यो । समुद्रको पानी स्वभावैले सफा र धमिलो पाइन्छ। फिजीको बीच कम्बर आइल्यान्डमा ड्राइभिङ गर्दा देखेको सफा पानी, पूर्वी टिमोर

**बेलिजबाट बोट ट्याक्सी झिःकाई क्षितिज नै छिचोल्ने गरी हानिएँ ।**



***बेलिज, सेन्टजर्जमा विण्ड सर्फिङ गर्दै लेखक***



को ओकोची पोटको समुद्रमा पौडी खेल्दा देखेको सङ्लो सफा पानीझैं बाटाका समुद्र सफा, सङ्लो थियो नकि ब्रुनाइको समुद्र जस्तो अत्यासलाग्दो धमिलो । बाटामा धेरै टापुहरु छिचोल्दै हामी लगातार अघि बढ्यौं । कुनै आइल्यान्डमा एउटै मात्र घर थिए त कुनैमा भर्खर घर बस्ती राख्न तयारी भइरहेको देखिन्थ्यो ।

झण्डै ३ घण्टाको यात्रापछि, पर्यटकीय दृष्टिकोणले दोस्रो स्थानमा महत्व बोकेको टापु किकाकामा ट्याक्सी बोट(डुङ्गा) रोकेर सहरको परिक्रमा गरी केही किनमेलपछि पोर्टमा फर्कियौं । पोर्ट भन्नाले डुङ्गा, जहाज रोक्ने वा राख्ने ठाउँलाई भनिन्छ, र बोट ट्याक्सी भन्नाले पैसा तिरेर ठाउँ ठाउँमा पुऱ्याइदिने डुङ्गालाई भनिन्छ । डुङ्गा विद्युतीय शक्तिमा चल्ने भएकाले अत्यन्तै चाडो पानीमा दर्गुछ । पोर्टमा साथीलाई पर्खिंदै गर्मीमा चिसो कोकाकोला किन्न दोकान पुगें । दोकाने युवतीले मलाई प्रश्न गरिन् मैले त्यसै दिनमात्र लगाएको स्वदेशको भेस्ट जहाँ 'माउण्ट एभरेस्ट, नेपाल' लेखिएको थियो । त्यसैलाई देखाउँदै, जानी नजानी अङ्ग्रेजीमा म नेपालबाट आएको भनिदिएँ । नव वर्षको पहिलो दिन पहिलो भेटको मान्छेलाई यसरी चिनारी दिन पाउँदा मैले गौरव महसुस गरें । त्यसपछि मुख्य पर्यटकीय सहर सानाप्राधोतर्फ बाटो लागें । अनायासै मेरो मानसपटलमा धेरै तरङ्गहरू उठ्न थाले -यहाँको जस्तै समुद्र मेरो देशमा भइदिएको भए कति राम्रो हुन्थ्यो होला । सप्तकोशी र गण्डकीमा पनि स-साना जहाज त चल्थे होला; किन नचलाएका होलान् ? यदि समुद्र हुनु हो त म आजजस्तै मेरो देशमा जहाज र बोटमा घुम्ने थिएँ । हाम्रा पुर्खाले कम्तिमा बङ्गालको खाडीसम्म सिमाना फैलाएको भए गाउँघरका सबैले समुद्र देख्थे, समुद्रमा चल्ने ठूल्ठूला जहाज देख्थे। जहाजको सुविधा उपभोग गर्न पाउँथे । खोई, पुर्खाले गरेनन्, अबको जमाना त्यो छैन । यसरी एकछिन बेस्सरी पुर्खाहरुलाई गाली गरें । धत् अन्धोभक्त यो सोच्नु मात्र पनि गल्ती हो । मेरो देशमा धेरै भौगोलिक विपत्ति छन् । तब त्यसलाई चिराचिरा चिर्न थालें । अन्दाजी डेड घण्टापछि अत्यन्तै सुन्दर सहर सनप्राधोमा पुगेर पर्यटक सोधपुछ कहाँ



*बेलिजीयन युवाहरू आफ्नो मौलिक वाद्यबाद्नमा*

गई, हामी भाडाको कार लिएर आफै हाँक्दै कुनाकुना घुम्न थाल्यौं । सानो टापुमा एयर पोर्ट रहेछ त्यहाँ पनि पुग्यौं । लगभग आधा घण्टा नबित्दै सहर घुमिसक्यौ त्यसपछि, किनमेल र समुद्रको बालुवामा सनवाथ गर्दै खेल्न थाल्यौं । समय कति चाडो बित्यो थाहै भएन ।

सबै साथीहरु आ(आफ्नो कार्यक्रमबाट बेलैमा वासस्थान सेन्टजर्ज टापुमा फर्किसकेका थिए । म नव वर्षको उपलक्ष्यमा सानप्राधोमा केही रमाइला चीज वस्तु किनेर फर्किएँ । त्यस बेलुकी हाम्रो वारवारक्यु पार्टी थियो । बेलुकी ४ बजे नै त्यहाँका स्थानीय दिदी बहिनीहरुसँग भलिबल प्रतियोगिता सुरु भयो । खेलमा उनीहरुको टिम राम्रै भए पनि अन्तत २ वटै टिमलाई हामी गोर्खालीले पराजित गऱ्यौं । जेहोस सौहाद्रपूर्ण वातावरणमा अनुशासनपूर्वकको खेलबाट धेरै आनन्द आयो नै । त्योभन्दा राम्रो पक्ष त्यस टापुको चलन हो । हामीलाई स्वागत स्वरुप त्यस खेलका निम्ति अनुरोध गरेका थिए । त्यसैले उनीहरुको त्यो सत्कारप्रति धन्यवाद दिनैपर्छ मैले । त्यस एडभान्चर इलाकामा अमेरिकी, जापानी आदि मुलुकका धनाढ्यहरु आफ्नै पानी जहाज वा भाडामा जहाज लिएर दिनभरि माछा मार्ने, विभिन्न खेल खेल्ने, निर्वस्त्र भई सनवाथ गर्दै हनिमुन मनाउने पर्यटकहरुको घुइँचो नै हुने गर्छ ।

पहिलेको राजधानी सहर बेलिज सिटीबाट बेलुकी आइपुगेका मेरा साथी ईश्वर जी हाम्रो क्रियाकलाप देखेर झस्कनु स्वाभाविक बन्यो । हतारहतारमा प्लेट र कागजमा Happy New Year 2058 लेखेर नरिवलको बोट र घरमा टाँस्दै हाम्रो सामु आएपछि र नव वर्षको शुभकामना आदानप्रदानको औपचारिकता पूरा गऱ्यौं । त्यसपछि २१ जनामध्ये केही साथीहरु भेला भएर राष्ट्रियगीत, लोकगीत बेस्सरी घन्काएर नाच्ने गाउने गर्न थाल्यौं । हामीसँग भएका अङ्ग्रेज साथीहरु, बेलिजियन साथीहरु पनि हाम्रै गीत सङ्गीतमा रमाउन पुगे । भनौं, त्यस दिन सदाझैं अङ्ग्रेजी र हिन्दी गीतको सट्टामा राष्ट्रियगीत र लोकगीत बजाएर हाम्रो नव वर्षको स्वागत गर्दै थियौं । त्यति बेला अनायासै घडी हेर्न पुगें -बेलुकीको ७ बजिसकेको थियो । हामी वैशाख १ गते मानेर भव्य रमाइरहेका थियौं । अफसोच त्यस दिनका लागि शुभकामनाको आदानप्रदान झण्डै ढिलो भइसकेको थियो । कारण बेलिजमा बेलुकीको ७ बज्दा नेपालमा भोलिपल्ट बिहानको ठिक ७ बजेको हुन्छ । पृथ्वीको ठीक विपरीत गोलार्द्धमा संयोगवस पुगेर धेरै रमाइलो साथ नव वर्षको स्वागतार्थ खुसीयाली मनाइयो तर वैशाख १ गते नभई २ गते पो पर्न गयो । अझ पनि स्वागतै छ अन्यअन्य नव वर्षलाई ।





# मलेसियाको माउन्ट किनाबालुलाई चुम्दा

प्रवासी हुनको मज्जा अलि फाल्टो हुँदोरहेछ क्यारे । अझ, लाहुरे अनि त्यसमा पनि ब्रिटिस लाहुरेको थोरै यथार्थ पोखूँ । सञ्चले ढुक्कसँग एकै ठाँउ लामो समय बस्न पाउनु त भाग्य नै चाहिन्छ नत्र कहीं कतै केही हराएको छ र त्यो पाउनलाई हिँडेको हिँडेकै गर्नुपर्छ । ब्रुनाइमा रहेको लाहुरेको दिनचर्याको कथा अझ रोचक छ । मानौं आज नेपाली विशेषको दसैं चाडमा ५ दिन विदा, त्यसपछि तिहारमा केही दिन विदा, त्यसको केही समयपछि ब्रिटिस विशेष क्रिसमस चाडको अवसरमा १५ दिन विदा, त्यसको केही समय पछाडि ब्रुनाइ स्वतन्त्रता दिनको विदा, बेलायतका महारानीको जन्मोत्सवको विदा, नेपालको राजाको जन्मोत्सवको बिदा, ब्रुनाइको राजा सुल्तानको जन्मउत्सवको बिदा, ब्रुनाइको मुस्लिम धर्मअनुसार हरिराया विदा, चाइनिज न्यु इयर विदा, चैते दसै, शिवरात्रि विदा, फागु पूर्णिमा बिदा, नेपाल नव वर्ष विदा र प्रजातन्त्र दिवसको बिदा, मैले यहाँ यी कुरा दर्शाउनुको अर्थ ब्रुनाइका ब्रिटिस सिपाहीले के कति विदा र छुट्टिट सुविधाहरु प्राप्त गर्छन् भन्ने सवाल दर्शाउनु हो । यी बाहेक अन्य सेवा सुविधा र असुविधा जटिलता यहाँ दर्शाउनु सम्भव छैन र न्याय नहुन सक्छ । तर, केही कुरा तपाईंसँग राख्ने जमर्को गर्नु न्याय नै हुन्छ भन्ठान्छु । त्यो विषय हो एडभान्चर ।

कुरा गत वर्ष डिसेम्वर २००३ को हो । पल्टनमा कहिलेकाहीं उपहार पर्ने गर्छ । हो त्यही उपहार मलाई पनि पऱ्यो । दक्षिणपूर्वी एसियाकै निक्कै लोकप्रिय र चर्चित सहर कोटाकिनावालु र कोटाकिनावालुको शिर माउन्ट कोटाकिनावालु अर्थात् (Taman Kinabalu) जुन ४०९५ मिटर अग्लो उचाइमा रहेको छ । त्यो अग्लो शिखरको दायाँ वायाँ असाध्य सुन्दर नदी किलु बगिरहछ । त्यसको केही पर ह्वाइट वाटर सेतो पानीको नामले विश्व प्रसिद्ध पाडास नदी बेस्सरी हाम्फाल्दै नजिकै रहेको समुद्रमा पुगेर आफ्नो

सम्पूर्ण आक्रोश थन्काउने काम निरन्तर चलिरहेको हुन्छ। म आफ्नो एड्भान्चर ग्रुपसँग बडो उत्सुकताको साथ ब्रुनाईको एक मुख्य वन्दरगाह सरसा मौराबाट, सानो पानीजहाज चढेर सुन्दर टापु लावुवान हुँदै साढे ५ घण्टापछि कोटाकिनावलु उत्रिएँ। त्यहाँ पुगेको केही समय नहुँदै एकजना ख्याउटे व्यक्तिले स्वागत अभिवादन गर्दै हामी चढ्नु पर्ने बस देखायो। हामी बसमा चढेर कोटाकिनावालु सहर घुम्दै पहाडको फेदी सेन्चुरी होटलमा पुग्यौं। कोटाकिनावालु सहर मलेसियाको १३ प्रान्तमध्ये सबैभन्दा ठूलो राज्य सावाको राजधानी हो। यो सहर व्यापारी र राजीतिक दृष्टिले निक्कै महत्वपूर्ण मानिन्छ र विकास पनि सन्तोषप्रद ढङ्गले भएको छ। वेलुकी हामी निक्कै रमाइलो ठाउँमा गएर खाना खायौं त्यस पछि हामी आआफ्ना् स्वेच्छाले शहर घुम्न निस्कियौं। कोही साथी रातभर ज्युँदै रहने सहरमा घुमेर लामो समय विताइरहेका थिए।

एड्भान्चरको कार्यक्रमअनुसार हामी बोर्नियो एक्पोडिसन्को ( Diethelm Borneo Expedition Ltd. Sabah) निर्देशनअनुसार पहाडको फेदीमा रहेको सहर कोटाकिनाकालुबाट उकालो लागेर पहाडको तरेलीतरेली छिचोल्दै माउन्ट किनावालुको पार्कमा पुग्यौं। सबै साथीहरु नेपालको जस्तो पहाडमा पुग्दा खुसी देखिन्थे। मेरा लागिचाहिं त्यो ठाउँ त्यति नौलो थिएन। कारण सन् १९९८ ताका म पहिले नै पुगिसकेको थिएँ। फरक त्यसबेला व्यक्तिगत र यसपटक औपचारिक थियो। त्यसबेला रनऔ कनिङऔ, तमुनान यात्रा गर्ने लालचीले आखिर आधा बाटो रात पर्नाले अप्रत्याशित रुपमा सिङ्गो बस रिजर्भ गरेर कोटाकिनावालु सहर फर्कनु परेको घटना झलझली सम्झिरहेको हुन्छु। त्यसबेला कुन्नि कसरी त्यस इलाकाको निक्कै वर्णन गर्न मन लागेछ क्यारे, उसैबेला एउटा कविता लेखेर मेरो कवितासङ्ग्रह 'परदेशीका कोशेली कविताहरु' २०५५ मा समाबेश गरेको थिएँ यसरी :

## माउन्ट किनावालु

*तिमी त स्वाभिमानमा रमाएका छौ*
*समुद्रको डीलमा बसेर*
*चिसो सामुद्रीक बतास मात्र होइन*
*सी फुड, व्यापार पर्यटन र*
*थुप्रै माछा मार्दै*
*दिनहरु गुजारा गर्दा रहेछौ।*

*चार हजार पन्चानब्वे अग्लो शिर उठाएर*
*दक्षिण एसियालीको प्रतिनिधित्व गर्दै*
*बेग्लै आफ्नो परिचय कमाएका छौ*



*अस्तित्वको निम्ति संघर्ष अनि*
*तिम्रा सामु थुप्रै विकटता पनि छन्*
*कहिले कोटा किनावालुको मिर्मिरे छिचोल्दै*
*कहिले त्यो पहरे बाटामा सम्हालिदै*
*बादल, हुरी, बतास, वर्षाको सामना गर्दै*
*तिम्रो इज्जत तिम्रो प्रतिष्ठा सधैंसधैं*
*बाँचिरहेको छ, बढ्दै गएको छ।*

*ती चुरे पहाडको उच्च शिखर मात्र होइन*
*तिम्रो बफादारी गर्ने*
*स्वावलम्बी नागरिकहरुको*
*गगनचुम्बी भवनहरु*
*अनि ठूलाठूला पानी जहाज, हवाइ जहाज*
*छताछुल्ल छरिएका नेपालझैं*
*झुप्रा छाप्राले त्यति नै आकर्षित छौ*
*नेपालका हिमशिखरहरुसँग दौतरी खेल्दै*
*प्रत्येक पक्षमा नेपालको प्रतिनिधत्व गर्ने*
*तिमी माउन्ट किनावालु*
*साँच्चै नै तिमी लज्जालु छौ। कहिले बादलमा लुक्छौ;*
*कहिले पहाड र घुम्तिमा लुकामारी खेल्छौ*
*तर तिमी त्यो फुलवारी पार्कमा*
*कुनै बेला दार्जिलिङको रुपमा उदाउँछौ*
*कुनै समय युरोपियन ढाँचामा बद्लिन्छौ*
*कहिले दक्षिणकालीको याद दिलाइदिन्छौ।*

*चाहे तिमी जे गर, जे भन*
*मलाई त तिम्रो छातीमा*
*दाउरा काट्न र गोठाला गर्न मन लाग्छ*
*सुरिलो लोकसुसेलीमा लहरिन मन लाग्छ*
*छङछङ झर्ने झरनाहरुमा भिज्दै रम्न मन लाग्छ*
*तिम्रो त्यो घना अनकन्टार हृदयभित्र हराई*
*चिच्याउँदै मेरो अन्तर भावना पोख्न मन लाग्छ*
*कुनै क्षण लड्दै जाने ढुङा लडाउँदै*
*धेरै तल खोला पुगी पानी पिएर*

अलैची गोड्दै, गोठ पुगौं जस्तो लाग्छ
उर्ली जाने भेलसँग बग्दै
केही मिनेटभित्रै समुद्र कहाँ पुगी
थकाइ मारौं जस्तो लाग्छ ।

तिमी एक्लो छौ यहाँ,
तिम्रा साथीहरु त नेपालमा थुप्रै छन्
त्यसैले शक्तिशाली छन्
तर तिमी एक्लो छौ
तर पनि किनावालु
तिमी धेरै प्रभावशाली छौ
किनकि तिमी प्यारासुटमा पनि
समुद्रतर्फ धकेलिन सक्छौ
पहराको मुहारले पनि पर्यटक मन
सजिलै जित्न सक्छौ
वर्षवर्षमा हुने प्रतियोगिताहरुमा
धावकहरुलाई विजय बनाई
थप मनोरञ्जन बाँडिरहन सक्छौ
तिम्रो सहारामा हुर्केका
रनऔ तमुनान, कनिडाओं हुँदै
चक्कर मार्दै पुनः फेदी कोटाकिनावालुमा
बास बस्न आइपुग्दा साह्रै नै मन लोभ्याइदिन्छौ ।

बाटाको दायाँ बायाँ देखिने रोपाईंले
झनै आसाढ, श्रावणमा नेपाल पुऱ्याइदिन्छौ
गाउँ, बस्ती र वातावरणले
ठ्याम्मै नेपालको यथास्थिति दर्शाइ दिन्छौ
माछा नै माछा बेचिने फिलिपिनो मेला
अन्य धेरै मेला र सहर बस्तीले
पूर्वी इटहरी, तरहरा, धरान र भेडेटारको
सगौरव प्रतिष्ठा बढाइदिन्छौ
तर तिमी सफा छौ, स्वस्थ छौ
मलेसिया शावाको तिमी ढुकढुकी हौ



शिखर किनावालु र सहर कोटा किनावालु
लाभुवन टापुको समकालीन छौ तिमी
त्यसैले तिमी सुन्दर छौ, सुन्दरी छौ
माउन्ट किनावालु ॥

**कोटा-किनावालु केही तल समुद्र छ र यो समुन्द्र संसार कै सफा पानीमध्येको एक पर्छ । अलि मास्तिर वनपाखा र छङछङ बग्ने झरना र खोलाहरू...**

हो साँच्चै कोटाकिनावालु र उसका आकर्षका स्थलहरु अनौठा छन् । केही तल समुद्र छ र यो समुन्द्र संसारकै सफा पानीमध्येको एक पर्छ । अलि मास्तिर वनपाखा र छङछङ बग्ने झरना र खोलाहरू छन्, त्योभन्दा अझमाथि जाँदा अत्यन्तै चिसो हावापानी छ, समग्रमा भन्नुपर्दा प्रकृतिको अनौठो संयोग छ । हामीलाई गाइडले कार्यक्रमको तालिका अनुसार लैजाने गर्थ्यो । हामी कोटाकिनावालु सहरदेखि हिंडेको दिन माउन्ट किनाबालु शिखर चुम्न ६ किलोमिटरको बाटो बाँकी रहने ठाउँमा पुग्यौं । असाध्यै उकालो चढ्दा हैरानी थाकेको त्यसमा जाडाले थरथर काँपेकोबेला हामीलाई निक्कै समस्या परेको थियो तर त्यहाँ संसारका विभिन्न ठाउँबाट आएका पर्यटकहरु थिए । उनीहरुसँगको घुलमेलले निक्कै आनन्दित बनाएको थियो । जङ्गलको बीचमा त्यही एउटा मात्र घर थियो जुन घर बस्तीबाट धेरै टाढा थियो, त्यो घर डेढ दशकअघि मलेसियन आर्मीले बनाएका थिए र अन्यन्तै जाडोको कारण कोही साथी विरामी पनि परे । रात छिप्पिसकेकाले हामी पनि आआफ्नो ओछ्यानतर्फ लाग्यौं ।

भोलिपल्ट बिहान ३ बजे ब्युँझेर हामी शिखर चढ्ने तम्तयारीमा लाग्यौं, हामीले त्यस बिहान सिर्फ ६ किलोमिटर मात्र उकालो चढ्दा माउन्ट किनावालु जुन दक्षिण पूर्वी एसियाको सबैभन्दा अग्लो शिखरलाई चुम्नेछौं । हामी झण्डै ४ बजेतिर बाटो लाग्यौ । हाम्रो अघिपछि कोही

मलेसिया शावाको पाडास नदीमा राफटिङ गर्दा वोर्ड पल्टेको बेला, लेखक अगाडि



अङ्ग्रेज, कोही जापानिज, कोही इटालियन, कोही कोरियन पर्यटकहरु थिए। बाटो लागेको झण्डै २० मिनेटपछि डोरीको सहारा लिएर उकालो चढ्नु पर्ने बाटा आए। अचानक लड्यौं भने ज्यान जाने बाटा छन्। जोगिँदै सम्हालिंदै निरन्तर उकालो चढिरहेका छौं। हाम्रो ग्रुपका कमान्डर भूपजित र रघुवीर सवलाई निक्कै गाह्रो परिरहेको थियो। अलिमाथि पुगेपछि मलाई पनि साह्रो पऱ्यो र मसँगै हिंडेको जिख राई भाइले मलाई अत्यान्तै ठूलो सहयोग गरे। बल्लतल्ल निक्कै समयलगाएर ४,०९५ मिटर उचाइमा रहेको शिखरमै पुग्यौ र हामीसँग भएको सेटलाइट फोन मार्फत् हाम्रो मुख्यस्थान ब्रुनाइमा जानकारी गरायौं। सिमसिम पानी परिरहेका कारण लामो समय बस्न सक्ने अवस्था नभएकाले हामी तुरुन्तै फर्कियौं। आज पनि जिख भाइको सहयोग बारम्बार सम्झने गर्छु। अनि त्यतिबिध्न दुःखवापत पाएको सर्टिफिकेट सुरक्षित राखेको छु। जुन सर्टिफिकेटले माउन्ट किनाबालु चढेको प्रमाणित गरेको छ।

त्यसदिन बेलुकी हामी किलु नदीको बगरमा पुग्यौं। हाम्रा लागि तम्बु बनाइएको थियो र त्यस रात त्यही बितायौ र भोलिपल्ट कायकिङ गर्न सुरु गऱ्यौं। कायकिङ गर्न व्यक्तिगत कला चाहिने भएकाले जुनबेला हामी केही सिकेर बाटो लाग्यौं, कोही साथी शुरु गरेको ५ सेकेन्ड नपुग्दै नदीमा घोप्टिए भने कोही साथी १० मिनेटमा, १२ पटकसम्म क्यापसाइट भए। क्यापसाइट भनेको सानो नाउँ जस्तोमा चढेको बेला नदीमा पल्टेर झर्नु हो। हामीले २ दिनसम्म निरन्तर त्यो तालिम गरिसकेपछि तेस्रो दिन कोटाकिनावालु सहर फर्केर झण्डै ३ घण्टा लामो बसको बाटो हिँडेर एउटा सानो सहरमा पुग्यौं। त्यहाँ रेल चल्दो रहेछ। हामी त्यो रेलमा चढ्यौं। भीर कुना काप्चामा रेल गुडिरहेको थियो। रेल सुस्त गतिमा झण्डै दार्जिलिङमा गुड्ने रेलको गतिमा झै दौडिरहेको थियो। घनाजङ्गल अन्धकार र गर्मी पनि ज्यादै थियो। मलाई त्यसबेला के महसुस भयो भने रेलको बाटोभन्दा गाडीको बाटो सबैको लागि सजिलो हुँदोरहेछ जस्तो लाग्यो। झण्डै अढाइ घण्टाको रेल यात्रापछि विश्वप्रसिद्ध पाडास नदीमा पुगेर जापनिज, चाइनिज र हामी गोर्खाली गरेर जम्मा ६ वटा राफटिङ बोट लिएर राफटिङ सँगै सुरु गऱ्यौं।

राफ्टिङ गरेर एक डेढ किलोमिटर तल झर्दै गर्दा आकाशबाट एकदमै घना पानी बर्षियो। त्यस दिन पाडास नदीमा भेल आए झै पानीले वरिपरि पूरै ढाकेको थियो। नेपालको भोटेकोसीभन्दा बढी हान्निएको थियो। प्रत्येक गल्छेडी र अप्ठ्यारा, खतरा ठाउँको नाम राखिएको थियो। सर्कल विग स्टोन जस्ता नामका गल्छेडी अत्यन्तै खतरा थिए र दुई दिनअघि किलुरिभरमा राफ्टिङ बोटसँगै पल्टदा २,४ मिनेट पानी भित्रै बस्नु परेको घटनाले गर्दा निक्कै डर लागिरहेको थियो र हामी अत्यान्तै खतरा ठाउँ पार गरेर सकुशल गयौं तर पछि आउँदै गरेका जापनिज ग्रुपको बोट पल्टियो। अनि मेरा साथी



प्रेमदोर्जी सेर्पा भएको राफ्टिङ बोट पल्टेलाझैं मात्र गर्दै थियो ऊ हतारमा झ्वाम्म बाहिर हाम्फाल्यो तर बोट पल्टेन। बिचरा प्रेम अघिल्लोपटक झैं २, ४ मिनेट बोटले थिचेर नराखोस भनेर चलाख गरेको तर ऊ मात्रै बाहिर पऱ्यो र फसियो।

सानै छँदादेखि पौडी खेलेकाले स्वीमीङमा केही सौख छ र राफ्टिङ इन्स्टक्टरले मलाई फकाएर बोट बाहिर धारिलो पानी बगिरहेको ठाउँमा हाम फाल्नु भन्यो। हामफालें तब मलाई त्यहीं छोडेर उसले बोट अघिअघि लिएर गयो मलाई अब एकदमै डर लाग्यो त्यत्रो बिध्न ठूलो नदीमा बग्दै साथी पछ्याउन गाह्रो थियो। केही तल ठूलो छहरा आयो म अब आत्तिए तर अर्को इन्स्टक्टरले मलाई पर्खिरहेको रहेछ। उसले भन्यो विश्वास अब मलाई पछ्याउनु उसलाई भेटेपछि मलाई ठूलो सास आयो। उसले जे गर्छ त्यही गर्दै पछ्याउँदै गएँ। त्यति ठूलो नदीमा झण्डै अढाइ कि.मि. बाटोचाहिँ पौडिएर आउनु पर्दा निक्कै डर लाग्यो र राफटिङ सिद्धिने ठाउँमा मलाई छोड्ने इन्स्टक्टरलाई भेटेर मैले रिसाउने भाकामा उसलाई कराए ऊ मसँग धेरै जिस्कने भएकाले मलाई फकाउँदै भन्यो। 'विश्वास तिम्रो स्वीमीङ कस्तो छ भनेर मलाई थाहा छ तिमी ठूलै नदीमा पनि पौडिन सक्छौ। त्यही भनेर मैले छोडेको थिएँ। आसा छ मज्जा लियौ होला।' मैले पनि हुन्छ दुखमनौ गर्दिन भन्दिएँ। सुरुमा त धेरै डर लागेको थियो र रिस पनि उठेको थियो। जब डर लाग्ने काम पूरा हुन्छ तब मज्जा पनि बिशेष त्यसैमा हुँदोरहेछ क्यारे। त्यसबेला मलाई खुबै आनन्द भइरहेको थियो, कुनै बहादुरी काम गरे जस्तो गर्वले छाती पनि ढक्क फुलेको थियो। पानी सिमसिम परिनैरहेको थियो। नदीबाट निस्कने बित्तिकै नजिकैको कटेजमा हामीलाई लगियो त्यहाँ चौरासी व्यञ्जन भनेझैं विभिन्न खानपीन सजाइएको थियो।

सुरुदेखि हामीसँगसंगै रहेकी नेपाली युवतीझैं देखिने केटीसँग राम्ररी चिनजान गऱ्यौं। वास्तवमा ऊ थाइल्यान्डबाट आएकी लिया रहिछे। ऊसँगै भएको अङ्ग्रेजजस्तो देखिने केटाचाहिँ उनको ब्वाइफेन्ड रहेछ र उचाहिँ अस्ट्रेलियाबाट आएको रहेछ। लिया धेरै चञ्चली थिई, हामीसँग धेरै बोल्न रुचाउँथी। केही

**कायकिङ गर्न व्यक्तिगत कला चाहिने भएकाले जुनबेला हामी केही सिकेर बाटो लाग्यौं, कोही साथी शुरु गरेको ५ सेकेन्ड नपुग्दै नदीमा घोप्टिए भने कोही साथी १० मिनेटमा, १२पटकसम्म क्यापसाइट भए।**

लामो समयको बादविवाद र दुःख र सुखका गफपछि हामी फेरि त्यही रेल चढेर बस स्टेसन आयौं, बस चढ्यौं । बसमा यात्रा गरिरहेको बेलामा साथीहरुसँग नेपाली गीत सङ्गीतको चर्चा निक्कै चल्यो । म विभिन्न गीत गुन्गुनाउँदैं थिएँ मेरा साथी प्रेमदोर्जी सेर्पाले मलाई साथ दिएकोले बसमा सङ्गीतमय वातावरण बन्यो । मेरो सिटका ठिक अगाडि ब्वाइफ्रेन्डसँग बसेकी लियाले प्रत्येक गीतको अन्त्यमा ताली बजाएर धन्यवाद दिन्थिन् । झण्डै ४५ मिनेटभन्दा बढी हाम्रो गायन चलिरहयो । लिया आफैं हामीतर्फ फर्किन र अब मेरो पालो भनेर थाई भाषामा गीत गाउन सुरु गरिन्, ध्यानपूर्वक हामी सुनिरह्यौं । गीतको अन्त्यमा ताली बजाइदिएको गुन फर्काउनु पऱ्यो भनेर हात ताली वजाउन तयार वनाएर राखेको हुन्छु, अब त सिद्धियो होला भनेर ताली लगाउनलाई तम्सियो फेरि गीत जोडिदै आउँछ । बल्लतल्ल झण्डै १० मिनेटतिर मात्र उनले गीत गाएर सिध्याइन् तब ताली बजाएर धन्यवाद दियौं । खोई थाई गीत नै लामो हो कि लियाको मन फराकिलो हो पत्तो भएन तर उनको सुरिलो स्वर भने आजतक कानमा गुञ्जिरहेझैं लाग्छ । साँझ परिसकेको थियो । हामी कोटाकिनावालु शहर आइपुग्यौ र लियालाई ऊ वसेको होटलमा पुऱ्यायौं । लिया भेलिपल्ट थाइल्यान्ड फर्कंदै थिइन् र हामी पनि ब्रुनाइ फर्किनु पर्ने थियो तर त्यसैक्षण हामीले छोटो समयमा असल साथी बनाएकी लियालाई सदासदाका लागि विदाइको हात हल्लायौं । लिया आज पनि हामीभन्दा टाढा छिन् तर आकर्षक बस्त्रले सजिएकी लिया आँखैमा नाचिरहेकी झैं लाग्छ र उनको फर्साइलो बोली कानमै गुञ्जिरहेझैं लाग्छ ।

एक हप्ता लामो एड्भान्चरमा खिचेको मुभीलाई ध्यानपूर्वक भिडियो सी.डी. बनाएर साथीहरुलाई बाँड्दा ब्रुनाइ डलर ६० जम्मा भएको थियो, वास्तवमा त्यो नै मरो भिडियो सम्पादनबाट आएको पहिलो कमाइको सुरुवात थियो । आज पनि त्यो दुखबाट आएको कमाइको सम्झना बेलाबेला आइरहन्छ । लाहुरे जिन्दगी वास्तवमा ज्यादै अनौठो छ । कहिले दुःख, कहिले सुख । अझ लोकप्रिय कथन छ नि 'रफ एन्ड टफ' हो वास्तवमा कहिले भोक, निद्रा नभनी काम गर्नुपर्छ । कहिले जङ्गलमै लामो समय बस्नुपर्छ, कहिले ५ तारे होटल हाम्रा लागि कमस्तरको बन्न जान्छ, कहिले जहाज चढ्ने हाम्रै मात्र पेवा हो कि जस्तो लाग्छ । खोई, यो लाहुरे जिन्दगी कस्तो कस्तो, सधैं हुरी बतासजस्तो ।

*११ जुलाइ २००४*



# फ्रान्सबाट फर्कंदा पानी जहाज झण्डै पल्टियो

जिन्दगी जिउनुलाई हो जसरी जिए पनि हुन्छ, जीवनलाई बन्धकी राखे पनि हुन्छ, जीवनलाई कतै लिलाममा बेच्न राखे पनि हुन्छ, जीवनलाई कतै कसैलाई बेचे पनि हुन्छ । आखिर जिन्दगी जिउनुलाई हो जसरी जीए पनि हुन्छ । यो भावना कुनै वेलाको संवेग मात्र हो । वास्तवमा जिन्दगी जिउनलाई सिक्नुपर्छ, जिन्दगी कहिले शिरमा सिङ्गार्नु पर्छ । जिन्दगी कहिले पाइलामा टेक्नुपर्छ । हो साँच्चै नै जीवन दुःख र सुखको संगम हो । संमग्रमा जीवन एउटा विवशता हो जीवन एउटा नियति हो ।

जवानी बेच्न अर्को लाहुर जानु घर जाने बिचल्ली चेलीको भन्दा मेरो जीवन खासै फरक छैन । मैले पनि मेरो स्वाभिमान बेचेको छु । मेरो राष्ट्र र राष्ट्रियतालाई कुल्चिएको छु । घर परिवारबाट टाढिएको छु, हो साँच्चै नितान्त कुनामा टाढिएको छु । आजकाल कुनै वेला देश, परिस्थिति र एक सज्जन नागरिकको कर्तव्य बोध हुँदा मेरो विवशतासँग धेरै असमति जनाउँछु तर मसँग सिर्फ आक्रोस छ र वाध्यता र कसैले मलाई परदेशमा रहेर पनि गाउँ समाज र देशको निम्ति केही गरिरहेको छौ भन्दिए त्यो एउटा सान्तवनाको शब्द मात्र हुनेछ ।

मेरो अल्लारे जोवन ब्रिटिस सरकारसमक्ष पुऱ्याएको झण्डै सात बर्ष बितेको थियो । कुरा आजभन्दा ३ वर्ष अघिको हो । ब्रिटिस पारासुट शुरुवातको इतिहाससँगै गोर्खालीको नाम आउँछ । उच्च मर्यादा रहेको ब्रिटिस पारासुटमा झण्डै ४ वर्ष सेवारत हुँदाका धेरै तीतामीठा संस्मरणमध्ये आज फिल्म टाइटानिकको जहाजझैं झण्डै घटित घट्ना अनन्तसम्म मिठो सम्झनाको लागि सुरक्षित गर्न लागिरहेको छु ।

हामीमध्ये अमेरिकाअन्तर्गतको बेल्जियम ओभरसिज एक्सरसाइज सिध्याएर कोल्चेस्टरको मियानी ब्यारेक फर्केको केही समय नबित्दै अप्ट्याग OP-TAG तालिमको



*फ्रान्सको क्लाइज शहर*

लागि वेलायतको उत्तरपूर्वी क्षेत्रको डोभर शहर नजिकको लिड्स क्याम्पमा गोली हान्ने तालिम गर्न थाल्यौं । बनावटी पण्डित, सिभिल मार्दा निक्कै सजाय पाएका थियौ । व्यस्त सहरमा दुश्मन-लाई मात्र चिनेर मार्नु निक्कै गाह्रो थियो । पप र सपिङ सेन्टरमा दुश्मन चिनेर गोली हान्दा सिभिल धेरै मरेका थिए । अत्यन्तै व्यवस्थित तालिम स्थल साच्चै नै रमाइलो समुन्द्रको डिलमा रहेको छ । हामीले लगातार ३ हप्ताको समयावधिमा उक्त ट्रेनिङ सिध्याएपछि हामी नजिकको फ्रान्समा घुम्न जाने योजना बन्यो । तब हामी डोभरस्थित पानी जहाज स्टेसन पोर्टमा विहान सबेर हामी पुग्यौ । हामीसँग ब्रिटिस सेना हुनुको परिचय पत्रले युरोपको अधिकांश मुलुकमा विना भिसा जान पाउने सुविधाअनुसार हामी फ्रान्सतर्फ हान्नियौ । एउटा विशाल पानीजहाजमा चढ्न पाउँदा एउटा नौलो अनुभूति भइरहेको थियो । झण्डै ३ घण्टाको यात्रापछि हामी फ्रान्सको क्लाइज सहरको बन्दरगाहमा उत्रियौं । फ्रान्सको वारेमा थोरबहुत कुराहरु हामीले सुनेका थियौ । त्यसैले पनि फ्रान्स जाने कौतुहलता औधि थियो । वस यस पटक भयो ठिक त्यस्तै । हामी हतारहतार पानी जहाजबाट वाहिर निस्केर सहर घुम्न आतुर भयौ र आआफ्नो स्वेच्छाले घुमफिर गर्न थाल्यौ । उमेर कै दोष हो कि कुन्नि के हो असाध्य भोक लाग्यो । मसँग अरु २ जना साथी थिए । हामी होटलभित्र पस्यौं र केही खाने कुराको अर्डर गर्न खोज्यौं तर होटलका मान्छेले अंग्रेजी पटक्कै नबुझ्दो रहेछ, अब हामीलाई फसाद पर्‍यो । हेर्दा इंग्रेजीभन्दा खासै फरक नपर्ने तर केही भिन्न्न रुपरङ भएका

---

**अन्धकार भइसकेको थियो । म अकस्मात उछिटिएर पर पुगेर लडें, मैले हेर्दाहेर्दै त्यो बारको ग्लास, वियर हुस्कीका वोतल सोहोरिएर झर्‍यो, सवै झ्याल फुट्यो, जहाज पूरै छड्के पर्‍यो । त्यहाँ हाहाकार मच्चियो ।**

---



फ्रान्सेली ती साहुनीले हामीलाई असाध्य नियालेर हेरिन् तर भाषा समस्याको कारण त्यस होटलबाट बाहिरियौ । र सल्लाह गर्‍यौ, मैले भने अब चाहिँ हातले मात्रै देखाएर भए पनि मागेर खानुपर्छ ।

अनि हामी अर्को होटल पस्यौ त्यहाँ अलिअलि अङ्ग्रेजी बोल्ने मान्छे थियो । हामीले चाहेको कुरा हातैले देखाउदै अर्डर गर्‍यौं र भोकले हैरानी भएको वेला वल्लतल्ल खान पायौं । खोई त्यो संजोग नै हो या त्यहाँका मान्छेले अङ्ग्रेजी नै नजानेका हुन वा अङ्ग्रेजी भाषालाई घृणा गरेका हुन् यकिन भएन तर अङ्ग्रेजी बोलेमा संसार जुनसुकै ठाँउमा बाँच्न सकिन्छ भन्ने हाम्रो आम धारणाले फेल खाएको थियो, त्यो क्षणमा । एउटा अंग्रेज देशबाट ३ घण्टाको बाटो हिडेपछि पुगिने ठाउँमा अंग्रेजी नै नबुझ्ने समाज र वातावरण पाउँदा हामीलाई निक्कै अचम्म लाग्यो ।

हामी लाहुरे त्यसमा पनि युवा जमातको रुचिका कुरा धेरै हुन्छ । छ्यापछ्याप्ती सहर घुम्यौ । वेलावेला पानी सिमसिम परिरहेको हुन्थ्यो । हामी एउटा पसलमा पुग्यौ जहाँ राइफल, पेस्तोल, मेसिन गन बिक्री गर्न राखिएको थियो । हामी किन्न निक्कै लालयित थियौ तर दोकानेले भन्यो त्यो चीज किन्न त्यही देशको नागरिक हुनुपर्छ भन्यो । त्यसपछि हामी लुगाफाटा सपिङमा लाग्यौं । शहर सानै भए पनि अत्यान्तै सुन्दर र रमाइलो थियो । हामी पार्क, सपिङ सेन्टर घुम्यौं, म्युजियम जान खोज्यौं तर कुनै जानकारी उपलब्ध हुन सकेन । त्यस सहरमा अङ्ग्रेजहरु विशेष गरेर सिगरेट, हुस्की किन्न जाने गर्छन किन कि वेलायतको अनुपातमा फ्रान्समा निक्कै सस्तो पर्न आउँछ ती सामानको मोल ।

साँझ पख तोकिएको समयमा हामी भेला भएर बन्दरगाहमा आइपुग्यौ । त्यस साँझको पानी जहाज विहानको भन्दा अझ ठूलो थियो । त्यस जहाजभित्र दर्जनौं कार, मोटर, गाडी पार्क गर्न सकिन्थ्यो । २ वटा डिस्को कल्व र १ बटा ठूलो सपिङ सेन्टर, ठूलो क्यासिनो




*फ्रान्सबाट वेलायततर्फ लाग्दै गरेको पानीजहाज*

सेन्टर अनि ठूलो पप थियो । हामी पल्टनेहरुमा प्रायः साथीहरुसँग जिस्कने परम्परा छ । एक जना मेरो साथी नानी सुनुवारले अर्को साथीलाई फकाएर उसको हुस्की खाँदै थियौ । केही वेरपछि अरु साथीहरुले पनि नानी सुनुवारसँग पनि २ वोतल ब्ल्याक लेवल हुस्की छ भन्ने थाहा पाउनेवित्तिकै २ जना अरु साथीहरुले नानीलाई सपिङ सेन्टर घुमाउन लगे र अरुको पालो उसको हुस्की झिकेर चट पारिदिए । सवैजना पिउन पाएकोमा मस्त थिए र नानी पनि रमाइलो मानिरहेको थियो उसले पनि त्यो हुस्की पिउन पायो तर त्यो हुस्की मेरै भन्ने चाहि उसलाई थाहै भएन् । हुस्कीले मातेपछि कोही साथी हो हल्ला गर्दै जहाजको माथिल्लो तल्लामा गएर मातेको भाषामा स्काई इज ब्ल्यु भन्दै रमाइलो गरिरहेका थिए । म चाहिँ वारमा गएर टी.भी. हेर्दै थिएँ । जाडोको मौसम भएकोले बाहिर जाडो थियो र अन्धकार भइसकेको थियो । म अकस्मात उछिट्टिएर पर पुगेर लडें, मैले हेर्दाहेर्दै त्यो वारको ग्लास, वियर हुस्कीका वोतल सवै सोहोरिएर झर्‍यो, सवै झ्याल फुट्यो, जहाज पूरै छड्के परेको थियो । त्यहाँ हाहाकार मच्चियो । नानी केटाकेटी अत्तालिएर रोए । समय बेलुकीको साढे नौ बजेको थियो । त्यस्ता ठूल्ठूला जहाजमा त्यस्तो घट्ना सायदै हुन्छ । यदि त्यो जहाज पल्टिएको भए फिल्म टाइटानिकमा झै हामी हुने थियौ किन कि निश्पट अँध्यारो थियो, बाहिर अति जाडो, पानी पनि एकदमै चिसो थियो । हामी मध्येबाटोमा पुग्दा त्यो पानीजहाज पल्टन खोजेको थियो । त्यसैले यदि पल्टिहालेको भए उद्धार गर्न पनि अत्यान्तै गाह्रो हुनेथियो । टाइटानिक जहाज कसरी डुबेको थियो भन्ने चाहि बल्ल थाहा भयो । वास्तवमा जहाजले घुम्तिमा छड्के काटिरहेको वेला ठूलो छालले जहाजको पिँधमा हिर्काउदा त्यो घट्ना भएको थियो र आज पनि सो घट्नाको सम्झना बारम्बर आइरहन्छ ।

हामी वल्ल डोभर बन्दरगाह आइपुगेका थियौं । र, बाहिर निस्केर हामीले हाम्रो प्राइभेट वस पर्खिरहेको ठाँउ नजिक आएर एउटी कोरिएन अन्दाजी २१ वर्षकी युवती पनि आएर झण्डै पैंत्तालीस मिनेट बसी, मलाई उसले सायद गल्ती गरिरहेकी छे झै लाग्यो र केहीकेही सोध्न कौतुहल जाग्यो र ऊसँग मैले परिचय गरें । मैले कहाँ जाने भनेर सोधें उनले लन्डन जाने भनिन् । अनि ऊ चाहिँ रातोपिरो भएर लण्डन जाने तिमीहरु पनि त्यही जाने होला हैन भनेर प्रश्न गरिन । तर मैले भन्दिए हामी हाम्रो क्याम्प जाने, हामी त हाम्रो गाडी यहाँ पर्खेका हौं भनेपछि ऊ बल्ल हामीलाई छोडेर वस स्टेसनतर्फ लागिन् । युरोपमा एसियन पाउँदा हामीलाई स्वभाविक खुशी लाग्ने गर्छ । सायद उनलाई पनि त्यस्तै लागेको पो थियो कि कुन्नि ? पत्तै भएन् ।

*१७ जुलाइ २००४*



# बेलायतको प्रथम भ्रमण अनुभव

विविध कारणले सन् १८१५ देखि प्रवासिएका नेपालीहरुमध्ये केही गोर्खालीको नामबाट बेलायत र ब्रुनाइस्थित ब्रिटिस सरकारसमक्ष सेवारत छन् । देश सुरक्षालाई नालापानीको लडाई होस् या प्रथम र दोस्रो विश्वयुद्ध किन नहोस् कुनै पनि युद्धमा गोर्खालीहरुले आफ्नो वीरता राख्न सफल भएका छन् ।

भर्तीको सिलसिलामा म जब दुवइ, जर्मनको फ्रयाडफोर्ड हुँदै ग्याडविक एयर पोर्ट उत्रिएर लन्डनको दक्षिणपूर्वी छिमेकी ठाउँ अल्डरसटको चर्चकुर्कहम पुगें । त्यहाँ नेपालझैं प्रशस्त नेपालीहरुलाई मात्र पनि भेट्न पाएँ । चर्चकर्कहमबाट नजिकैको सहर फिलोट पहिलो कदममा घुमें । केही दिन पश्चात वाइचेस्टर टाउनस्थित रहेको विशाल गोर्खा सङ्ग्रहालयको सुवास्नाले म आकर्षित भएँ । पूर्व तयारीका साथ त्यसतर्फ लागें ।

गोर्खाली भन्ने शब्द किन यति प्रचलित र लोकप्रिय छ । किन र कसरी गोर्खाली शब्द विश्वको निम्ति परिचित र प्रसंशनीय भएको रहेछ । मलाई त्यो भव्य गोर्खा संग्राहलय (Gurkha Musiam) बाट शिक्षा मिल्यो । सङ्ग्राहलयभित्र पहिलो र दोस्रो विश्वयुद्ध, भारत स्वतन्त्रता, मलाया, ब्रुनाइ, फोकल्यान्ड, बर्मालगायत नेपाल अङ्ग्रेज युद्धका बारेमा दृष्य, मूर्ती र अभिलेख राखिएको छ । सो सङ्ग्राहलय सन् १९७४ जुन महिनामा स्थापित भएको रहेछ । त्यस संग्राहलय नजिकको अर्को ब्रिटिस इन्फेन्ट्री आर्मी सङ्ग्राहलयमा पनि धेरै कुरा हेर्न मौका मिल्यो । सङ्ग्राहलय अत्याधुनिकताले सुसज्जित थियो, जुन लाखौं पाउण्डमा निर्मित छ । मलाई कताकता नमीठो लाग्यो । यदि नेपालमा पनि यति सुविधायुक्त सङ्ग्राहलय भइदिएको भए ? गोर्खा सङ्ग्राहलयमा झैं आधुनिक

विकासको सहुलियतद्वारा आफै घुमाइदिने थियो । लाखौं विदेशी यात्रुहरुलाई निम्तो दिएर आर्थिक संकलन र प्रशंसा व्यापक प्राप्त गर्ने थियो ।

लण्डन यात्राको केही दिनपछि, अल्डरसट हुँदै फान्ब्रो शहर पुगें । त्यहाँ मलाई देखेर एक वृद्धा व्यक्तिले सोध्यो- के तपाई गोर्खा हुनुहुन्छ ? उत्तरमा म गोर्खा हो भनें । त्यसपछि उसले भन्यो, गोर्खाली मलाई राम्रो लाग्छ । किन कि तपाईहरु इमान्दार, विश्वासिलो र बहादुर हुनुहुन्छ । गोर्खालीले ब्रिटिसको निम्ति धेरै लडिदिएका छौ । तिमीहरुको हामीलाई ऋण छ भनिरहेको थियो । म मक्ख पर्दै सुनिरहें र अन्तमा धन्यवाद भने । फान्ब्रो सहर उसको पनि नजिकको शहर हो । उसले फान्ब्रोको बारेमा सबै कुरा बताइदियो । अन्तरहृदयबाट धन्यवाद आज पनि उसलाई ।

जुलाइको महिना थियो, जुन समयको मुख्य रमाइलो भन्नु नै समर (Summer) मौसम भएको हुँदा वरिपरि फूल बाहेक अरु वस्तुहरु कमै देखिन्थे । बेलायत साँच्चिकै फूलको मात्र संसार हो जस्तो भान हुन्छ । म लन्डन नजिक गिलफोर्ड शहर घुमिरहेको थिएँ, मैले पुराना राजा स्मेट (Smait) जातिको भग्नावशेष दरबार (Castle) हेरी सकेपछि गिलफोर्ड पुस्तकालयभित्र पसें । मलाई क्याम्पसको पुस्तकालयतिर झुलिर हेछु झैं भयो । त्यही मोडमा केही क्षण हराएँ ।

हुन त नेपाली भएर नेपालको आलोचना गर्नुभन्दा आत्मआलोचना गर्नु राम्रो हुन्छ । यद्यपि विज्ञानको कारण विश्व अर्कै मोडमा पुगेको छ । हाम्रो नेपाललाई अन्तर्राष्ट्रिय सामु सुहाउँदो कसरी बनाउने होला भनेर कहिलेकाहीँ मेरो मन खिन्न भएर आउँछ ।



लण्डनस्थित विश्वप्रसिद्ध टावर ब्रिज



मैले केही महिना स्थानीयवासीसँग नजिकिएर रमाउने अवसर पाएँ । नजिकिएको कारण मलाई- अङ्ग्रेजहरुले विवाह पश्चात स्त्रीले हातमा औंठी र पुरुषले लामो टाइ लगाउने संस्कृतिको बारे अवगत भयो । यौवन तृप्तिको निम्ति अति स्वतन्त्र पाश्चात्य मुलुकमा मैले अर्को विशेषता के पनि पाएँ भने, स्त्रीहरुलाई उमेर कहिल्यै सोध्नु हुँदैन । उनीहरु बताउन चाहँदैनन् अर्थात् बताउनै परे पनि ढाँटेर बताउने गर्दछन् । बेलायत विकसित मुलुकमध्येको एक हो । जहाँ उच्चतम विकसित विज्ञान र बौद्धिक भीड पाइन्छ । तथापि नेपालमा जस्तै अन्धविश्वासका मान्यताहरु पनि प्रशस्तै भेटिन्छ । कुनै समय बाटो हिंड्दा जोडी चरा भेटिएमा कालो बिरालोले बाटो काटेमा शुभसायत मानिन्छ । यदि एक्लो चराचुरुङ्गी भेटिन्छ, र बिरालो बाहेक अन्य जनावरले बाटो काटेमा बिसाइत भयो भनी विश्वास गरेको पाइन्छ ।

फूलबारी जस्तै रङ्गीचङ्गी फूल फुल्नु अति सफा र सुन्दर सुविधायुक्त सडक हुनु, वृक्षारोपणको जङ्गलले सारा हरियाली छाइदिनु, व्यवस्थित ढङ्गले शहर बसाल्नु तथा आवासीय बसोबास उच्चतम हुनु, जनताहरु ज्यादै फर्साइला र विनम्रवादी हुनु जस्ता कुराहरु बेलायतको मौलिक विशेषता अर्थात परिचय स्वीकारिन्छ । नेपालभन्दा ५ र ६ घण्टा समय ढिलो चलाउने बेलायतमा Summer Season को जति नै वर्णन गरे पनि कमी नै हुन्छ । यस समय रातको ११ बजेतिर मात्र रात पर्ने गर्छ । रात चाहिँ अत्यन्तै छोटो हुन्छ । नेपालको आषाढ साउनको ठिक विपरीत यो मौषम बेलायतमा हुन्छ । यो अर्को रोचक प्रसङ्गको रुपमा लिन सकिन्छ ।

कुनै समय विश्वमा नै शासन गर्ने अंग्रेजले आजतक हङकङ बाहेक ११ वटा उपनिवेश चलाउने अर्थात् विश्वमा सबैभन्दा धेरै औपनिवेश आजतक कायम राख्ने राष्ट्र बेलायत नै हो । बेलायतलाई ब्रिटेन, संयुक्त अधिराज्य वा United Kingdom (U.K.) नामबाट पुकारिन्छ । कहीँ कतै England मात्र उल्लेख गरेको पाइन्छ । वास्तवमा England एउटा State मात्र हो । यहाँको जनतालाई सम्बोधन गर्दा अङ्ग्रेज English शब्दले गरिन्छ ।

यसरी देश विदेशको भ्रमण गर्दा, हाम्रो देशको तुलनामा विज्ञान विकास सांस्कृतिक, सामाजिक, शैक्षिक, आर्थिक, राजनैतिक एवं भौगोलिक लगायत सबै कुराहरुमा अन्तर पाउन सकिन्छ । तर जस्तो आफ्नोपना छ, त्यसैमा गौरव गर्नुपर्छ भन्ने कुरा विभिन्न मुलुकहरु आआफ्नै ढाँचामा विकसित भएकोमा शिक्षा पाइन्छ ।

□□□

# नेपालीहरुको बेलायतमा घर किन्ने लहर

विभिन्न अवसरबाट बेलायत आएका नेपालीहरुको यहाँ आफ्नै सुखी र सुन्दर संसार छ । बेलायतको लागि स्टुडेन्ट भिसाबाहेक वर्क परमिट भिसा खासै पाइँन्दैन । यद्यपि अन्य मुलुकहरुमाझैं विभिन्न माध्यमबाट बेलायत छिर्ने नेपालीहरुको कमी भने छैन । बेलायत आउनाको मोह अन्य मुलुकको भन्दा अलि भिन्न छ । बेलायत आएका नेपालीहरुसँग विभिन्न प्रयोजनका निम्ति भिसा भए पनि प्रायः नेपालीहरु रोजगारीमा व्यस्त हुन्छन् ।

सजिलैसँग रोजगारी पाइने, अन्य मुलुकमाझैं लुकीछिपी नभई स्वतन्त्र बस्न पाइने, पाउन्ड स्टर्लिङ्को कमाइ राम्रो हुने, बेरोजगारी नै बस्न परे पनि बेरोजगारी भत्ता पाइने, ५ वर्ष निरन्तर बेलायत बसेमा आफ्नो कानुनी



लन्डन, पल्मस्टर्ड स्थित एक गोरखाली घर



हैसियत बढ्ने, शरणार्थी नै भएर बस्नु परे पनि सेवासुविधा राम्रो हुने भएकाले बेलायतमा नेपालीहरुको घुइँचो बढेको पाइन्छ । बेलायतका नेपालीहरुको संस्था यती एसोसियसनका अनुसार केही वर्षअघिसम्म बेलायत मै घर किनेर बस्ने नेपालीहरुको सङ्ख्या अत्यन्तै न्यून थियो । जुनबेला ब्रिटिस आर्मीमा सेवारत गोर्खालीहरुले घर किन्ने कार्यको सुरुवात गरेका थिएनन् । विगत २ अढाई वर्षदेखि गोर्खालीहरुको वेलायतमा घर किन्ने लहर नै चलेको छ । विभिन्न भागमा छरिएका नेपालीहरु विशेषत फानब्रो, फकस्टोन, आसफोट, रिडिङ, अल्डरसट, कोलचेस्टर, ब्रेकन, मेडस्टोन, लन्डनको ग्रिनवीच, पलम्स्टर्ड, नन्इटन्, बयम्ली, एक्टन टाउन, क्षेत्रमा बढी बसोबास गर्दछन् ।

घर किनबेच गर्ने कम्पनी र बैंकमार्फत् सेवारत गोर्खालीहरुलाई कानुनी रुपमा वैधानिक अवसर, सहुलियत तथा सुविधा प्राप्त हुने भएकाले अत्यधिक गोर्खालीहरुले घर किनेका छन् । विगत ३३ वर्षअघि बेलायत प्रवेश गर्नु हुने च्यारिङटन गोल्डेन भ्याली निवासी भू.पू. लाहुरे ओम क्षेत्रीकाअनुसार बहाल गोर्खाली र भूतपूर्व गोर्खालीले हालसम्म लगभग ४ हजारभन्दा बढी घर बेलायतमा किनिसकेका छन् ।

परम्परागत रुपमा स्वदेश मै बसोवास गर्ने लाहुरेहरु अब बेलायत मै घर किनेर सपरिवार बसोवास गर्न रुचाएका छन् । नेपालको दिनानुदिन बिग्रन्दै गएको शान्ति सुव्यवस्थाको कारण आफ्नो औकात हैसियतले भ्याएसम्म बेलायत मै बसोवास गर्न राम्रो हुने उनीहरुले मनशाय व्यक्त गरेका छन् ।

*सर्नक्लिफ,बेलायत*

*२८ जुन ०३*

# सुन्दर, शान्त र सम्पन्न ब्रुनाइ

आफ्नै मौलिक सौन्दर्यताले भरिपूर्ण ब्रुनाइ वास्तवमा वर्तमान विश्व सामु नमुना सावित बनेको छ। यो देश सामुद्रिक सतहदेखि १५ सय फिटसम्मको उचाइभित्र रहेको छ। यस देशका कुल ३ लाख जनसङ्ख्यामध्ये ६९ प्रतिशत मले, १७ प्रतिशत चाइनिज र ६ प्रतिशत यहाँका आदिवासी इभान जाति छन्। बाँकी ११ प्रतिशत अन्य जातिहरु पर्दछन्। देशको राजधानी सहर बन्दरसेरी वेगवान हो। ब्रुनाइले कार्यालयीय भाषाको रुपमा मले र अङ्ग्रेजीलाई प्रचलनमा ल्याएको छ। यस देशको मुद्रालाई ब्रुनाइ डलर भनिन्छ।

दक्षिणपूर्वी एसियामा पर्ने बोर्निया टापुअन्तर्गतका स्वतन्त्र राष्ट्र ब्रुनाइको छिमेकी मुलुकहरु- मलेसिया, सिङ्गापुर, इन्डोनेसिया र फिलिपिन्स हुन्। यहाँको ८० प्रतिशत भूभाग सदाबहादर जङ्गल (Rain Forest) ले ढाकेको छ। यस देशको भूगोल वास्तवमै नौलो छ। जनसङ्ख्या एवम् भौगोलिक रुपमा सानो ब्रुनाईको क्षेत्रफल ५,७७५ वर्ग कीमी छ तर प्राकृतिक आयस्रोतहरु तेल, ग्याँस र वैकल्पिकस्रोतचाहिँ घना अनकन्टार जङ्गल तथा उपयोगी बालुवा माटो आदि हुन्।

ब्रुनाइ विश्वको सबैभन्दा क्रियाशील एवम् शक्तिशाली राजतन्त्रात्मक मुलुक हो। राजतन्त्रको क्रम हालसम्म २९ औं पुस्ता पुगेको छ। यहाँका वर्तमान शासक राजा सुल्तान हाजी हसनल बोल्कियाज छन्। राजा सुल्तानको प्रथम पुर्खा सुल्तान महमद सह अर्थात् पुटरी जोहार सन् १३६१ मा साउदी अरबबाट आएका थिए। वर्तमान राजा सुल्तानले सन् १९८४ देखि शासन गर्दै आएका छन्। राजा सुल्तानलाई ज्यादै प्रभावशाली प्रतिभावान व्यक्तित्वको रुपमा चिनिन्छ। उनले अमेरिकी डलर ४५० लाख खर्च गरी विश्वको सबैभन्दा ठूलो राजदरबार बनाएका छन्। राजा सुल्तानको एक दिन बराबरको



आम्दानी ६ लाख पाउन्डभन्दा बढी पर्न आउँछ। विश्वको सबैभन्दा धनी १० व्यक्तिहरुमध्ये (सन् १९९८ को तथ्याङ्कअनुसार) राजा सुल्तान तेस्रो व्यक्तिमा पर्छन्, स्वतन्त्र ब्रुनाइ पनि विश्वको धनी राष्ट्रमध्ये एक हो। यहाँका एक नागरिकको प्रतिवर्ष आय अमेरिकी डलर २० हजारभन्दा बढी पर्दछ अर्थात् यहाँको विकास विश्वकै सर्वाधिक सरल र स्तरीय मानिन्छ।

यस देशको नाम सुन्ने बित्तिकै मानिसमा एक प्रकारको कुतूहलता जाग्दछ कि त्यति धनी मुलुकमा आकाश छेड्ने गगनचुम्बी विशाल भवनहरु होलान् भनेर। तर, ब्रुनाइ नपुग्नेका निम्ति यी कौतुहलता र कल्पनाहरु कुनै असाधारण भने होइनन्। कारण, विकसित जुनसुकै राष्ट्रले पनि गगनचुम्बी भवन बनाउने, अशान्तिका कडी आणविक अस्त्रको होडबाजी खेल्ने गरेको छ। तर यहाँको वास्तविक यथास्थिति भने मानिसको सोचाइभन्दा विल्कुलै फरक छ। यहाँ कुनै गगनचुम्बी भवनहरु छैनन्, यहाँ अस्तव्यस्त अव्यवस्थित सहर छैन। यहाँ ठूलाठूला महल छैनन्। निसासिदो डिस्को, पप छैन, अर्थात् मादक पदार्थलाई सार्वजनिक गर्न पूर्ण रुपमा प्रतिबन्ध छ। यहाँ भौगोलिक समानता, जातीय समानता र धार्मिक समानताका कारण सन् १९८८ देखि बहुपार्टीको निम्ति अनुमति छैन। यहाँका विदेशी कुल्लीहरुमा प्रायः फिलिपिन्स, इन्डोनेसिया, मलेसिया, बङ्गाली र भारतीय बढी पाइन्छन्। यहाँ कडा धार्मिक अनुशासनको कारण अनावश्यक फेसन पाइँदैन। समग्रमा भन्नु पर्दा ब्रुनाइ नेपाल भन्दा २४ गुना साना छ, तर ब्रुनाइ विकासको निम्ति परिकल्पित अन्तिम चरमसीमा भैं

**राजा सुल्तानको प्रथम पुर्खा सुल्तान महमद सह अर्थात् पुटरी जोहार सन् १३६१ मा साउदी अरबबाट आएका थिए।**


पानी माथि बनेका सयौं घर जसलाई वाटर भिलेज भनिन्छ (ब्रुनाई)

विश्वको सामु धनी राष्ट्र ब्रुनाइको एक दिनमा तेल उत्पादन गर्ने क्षमता २ लाख १ हजार व्यारल छ । विश्वको कुल तेल र ग्याँस उत्पादनको आँकडामा ब्रुनाइले क्रमशः ०.५ प्रतिशत र ९ प्रतिशत उत्पादन गर्दछ ।

सुन्दर शान्त र सु-सम्पन्न छ । यहाँ सानो र सुन्दर घरहरुको आवास मिलाइएको छ । यो देश साँच्चै नै सुखी छ । सन् १९९४ मा साम्राज्यवादी अङ्ग्रेजबाट स्वतन्त्र, स्वाधीन बनेर पनि अङ्ग्रेजहरुसँगको राम्रो, सक्षम कुटनैतिक सम्बन्धका कारण यस देशको निरन्तर प्रगति र विकासको गतिमा प्रगाढ स्थायित्व मिलेको छ ।

ब्रुनाइको रोचक पक्षहरु प्रशस्तै पाइन्छन् । चौरयुक्त आँगन भएका सा(साना छुट्टाछुट्टै सरकारले बनाइ दिएको घर जनताहरुलाई उपलब्ध छ । कार्यालयीय काम प्राप्त हुने भएकाले कृषिसम्बन्धी खासै चासो नभएको पाइन्छ । यहाँ मुस्लिम धर्म मान्ने प्रत्येक स्त्रीहरुले कपाल छोप्ने बुर्का लगाउने गर्छन् । सर कारबाट अरबको मक्कामदिना जाने सहुलियत मुस्लिम धर्मावलम्वीहरुलाई उपलब्ध हुने भएकाले प्रायःजसो मक्कामदिना जाने गर्दछन् । त्यसरी पुगेर आउने प्रत्येक पुरुष मलेले सेतो टोपी लगाई हाजी हुँ भनेर गर्व गर्छन् । यहाँका अल्पसङ्ख्यक आदिवासी इभान र ढुसुन जातिचाहिँ सरकारबाट निक्कै उपेक्षित देखिन्छन् । यहाँको अनौठो कानुन के छ भने, एक लोग्नेमान्छेले ४ वटीसम्म स्वास्नी ल्याउन पाउने प्रावधान छ, तर मानिसहरुले धेरै श्रीमती भित्र्याएको देखिँदैन । वर्तमान राजा सुल्तानले भने सलिह विन्टी (Saleha Binti) र मारियम विन्टी (Marian Binti) नाम गरेकी दुईवटी सुन्दरीलाई रानी बनाएका थिए तर हाल जेठी श्रीमतीमात्र छिन् । कान्छी चाहिं एक अर्कै व्यापारी पुरुषसँग पोइल गएकी छे। अत्यधिक धनी राजपरिवारहरुले धनको मामलाबाट मुस्लिम धर्मसम्मत हाडनाता भित्रकालाई विवाह गर्ने गर्छन् । ब्रुनाइ मुस्लिम राष्ट्र भएकाले यहाँका धार्मिक कानुनहरु नरम छैनन् । यहाँका मानिसहरु मंगोलियन अनुहारका हुने भएकाले नेपालीहरुसँग मिसिएमा छुट्याउन सकिँदैन । मुस्लिमहरु परिवार नियोजनमा खासै मतलव राख्दैनन् । यहाँका संस्कृति, संस्कार अन्य धर्मसँग नमिल्नु कुनै अस्वाभाविक कुरा होइन । यहाँका परम्पराहरु मुस्लिम धर्ममा अन्तर्निहित छन् ।

भू-मध्येरेखादेखि दक्षिण ४४३ किमि मात्र टाढा रहेको ब्रुनाइमा साधारणतया २ प्रकारको मौसममध्ये ६ महिना वर्षात् याम अत्यन्तै उच्च आद्रतायुक्त (Humidity) पाइन्छ भने बाँकी छ महिनाचाहिँ केही सुख्खा मौसम हुन्छ । मौसम जुनसुकै भए पनि यहाँका वनजङ्गल, बोटविरुवाका कारण सधैँ हरिया रहन्छन्, । अर्थात् ऋतु परिवर्तनसँगै आउने वसन्त ऋतु कहिल्यै आउँदैन । नेपालको चैतवैशाख जस्तो सुख्खा मौसम पनि हुँदैन । क्षेत्रफलको आधारमा सानो ब्रुनाइभित्र भौगोलिक तथा मौसमी विविधता छैन । भूमध्यरेखीय क्षेत्र भएकाले २८ डिग्री देखि ३२ डिग्रीसम्मको औसत तापक्रम हुन्छ । यहाँको जङ्गल एकदमै घना अनकन्टार छ यद्यपि यो अति सुरक्षित रहेको छ । यहाँको केही भूभाग दलदलयुक्त (Swamps) पनि भेटिन्छ ।

झण्डै आधा शताब्दीअघिदेखि तेल र ग्याँसको उत्पादनले ब्रुनाइलाई वास्तवमै ब्रुनाइ बनाएको छ । यहाँका सम्भावित स्रोतहरुलाई हेर्ने हो भने ठूलो मात्रामा विद्युतीय शक्ति उत्पादन क्षमता पाइन्छ । विश्वको सामु धनी राष्ट्र ब्रुनाइको एक दिनमा तेल उत्पादन गर्ने क्षमता २ लाख १ हजार व्यारल छ । विश्वको कुल तेल र ग्याँस उत्पादनको आँकडामा ब्रुनाइले क्रमशः ०.५ प्रतिशत र ९ प्रतिशत उत्पादन गर्दछ ।

शैक्षिक क्षेत्रमा पनि ब्रुनाइ धेरै अगाडि बढिसकेको छ । यहाँका प्राथमिक, माध्यमिक, कलेज र विश्वविद्यालय सङ्ख्या क्रमशः १५१, २९, ९ वटा र १ रहेको छ । ब्रुनाई विश्वविद्यालय (University Brunei Darussalam/UBD) मा विभिन्न विषयको अध्ययन अध्यापन हुन्छ ।

भनिन्छ सानो नै राम्रो, वास्तवमा ब्रुनाई सानो सुन्दर र शान्तिप्रिय छ । विश्वको सामु आफ्नो बेग्लै मौलिक पहिचान दिन सक्षम छ । समग्रमा भन्नुपर्दा सुन्दर , शान्त र सम्पन्नता नै ब्रुनाइको विशेषता हो ।

*स्रोत :* *The sun/world Fact File Book* Contech 1997/98, *Key Info Book 1997, * Country File 1997 Aug.

*-प्रवासी वेदनाका आवाज, वर्ष-१, अङ्क १*

# पानीभन्दा सस्तो तेल !

सानो देशलाई ठूलो आयस्रोत बनेको ग्याँस र तेलले साँच्चै नै ब्रुनाइलाई सम्पन्न बनाएको छ । विश्व आँकडाँमा चौथो ठूलो ग्याँस उत्पादक ब्रुनाइले तेल पनि ठूलो मात्रामा उत्पादन गर्दछ । तेल ग्याँस डिस्कभरी केन्द्रका प्रमुख स्कान्दर विन हाजीकाअनुसार ब्रुनाइमा ग्याँस, तेल झिक्ने, शुद्ध बनाउने र बेच्ने ३ वटा कम्पनी BSP, BLNG, BST मा ब्रुनाइका सुल्तानको ५० प्रतिशत बाँकी रोयल डच सेल र मिच्सिबिसी कम्पनीको लगानी रहेको छ । तेल ग्याँस डिस्कभरी केन्द्रका अनुसार सन् २००३ को उत्पादनमा वृद्धि भएर हाल प्रतिदिन २ लाख १ हजार ब्यारल उत्पादन रहेको छ ।

विभिन्न प्रकारका तेलमध्ये कतिपय ब्रुनाइमै शुद्ध बनाइन्छ भने कतिपय तेल ग्याँस शुद्ध बनाउन जापान र सिंगापुर पनि पठाउने गरिएको छ । युगौंअघि झारपात, बोटविरुवा अर्थात् ठूलो सङ्ख्यामा जीव जनावर माटोमुनि वा पानीको भित्री सतहमा पर्न गई विभिन्न रासायनिक प्रतिक्रिया भई कच्चा तेल ग्याँसमा परिणत हुने गरेको जानकारी उल्लेख छ । तेल, ग्याँस माटाको भित्री भागबाट झिकिने प्रक्रियालाई अनसोर र पानीको भित्री सतहबाट निकालिने प्रक्रियालाई अफसोर भनिन्छ । ब्रुनाइमा विशेषत अफसोरबाट बढी झिकिन्छ । ब्रुनाइको सेरिया इलाका तेल उत्पादन हुने मुख्य स्थान हो भने ग्याँस उत्पादनका लागि लुमुत क्षेत्र अगाडि रहेको छ।

सन् २००३ को रेकर्डअनुसार ग्याँस मुख्यतया जापान र दक्षिण कोरियामा बढी निर्यात हुन्छ भने तेल एसियामा ३२ प्रतिशत र बाँकी



अस्ट्रेलिया, अमेरिका र न्युजील्यान्डमा पठाउने गर्दछन् ।

कच्चा तेललाई शुद्ध बनाउदा विभिन्न स्तरको तेल ग्याँस बन्ने गर्दछ र त्यही कच्चा तेल शुद्धि गर्दा बाँकी आउने बस्तुबाटै कालोपत्र, बुट पालिस, लिपिस्टिक, स्याम्पोलगायतका कस्मेटिक सामन बन्दछ ।

ब्रुनाईमा प्रशस्तै तेल ग्याँसको उत्पादन हुने र सरकारबाट पनि सरकारी कर अति न्यूनतम राखिएकाले यातायातका लागि चाहिने तेल एकदमै सस्तो पर्दछ । एक लिटर पानी किन्ने पैसाले राम्रो जातको पेट्रोल झण्डै दुई लिटरभन्दा बढी पर्न आउँछ ।

*२३ फेब्रुअरी २००४*



*(भुइँमुनिबाट तेल, ग्याँस तान्ने टङ्की मेसिन (ब्रुनाइ))*

# सिङ्गापुरमा प्रवासी नेपालीहरुको पीडा

आजभन्दा दुई वर्षअघिको कुरा हो । स्वदेश फर्कने क्रममा ब्रुनाइबाट सिङ्गापुर आइपुगेको दिन, चाँगे एयरपोर्टमा एक नेपालीसँग भेट भयो । संयोगवस उसैले खोलेको गोरखा रेस्टुरेन्टमा खाना खाने र सुत्ने निधो भयो । साथमा केही साथीहरु थिए । हामी व्यस्त सहर सिङ्गापुर घुम्दा निक्कै अनौठा र राम्रा ठाउँमा पुग्यौं । आखिर बेलुकी अबेर आएर कोठा पस्न खोज्दा, त्यहाँ ढोकाभरि मान्छे सुतिरहेका थिए, सानो टेबलमाथि एक जना टेबुलमुनि दुईजना अप्ठ्यारो गरी सुतेका थिए । सोधीखोजी गर्दा थाहा भयो, ती सबै नेपाली विदेश गएर पैसा कमाउने अनन्त सपना बोक्नेहरु रहेछन् । टेबलमाथि सुतेकालाई उठाएँ ऊ नेपालको भोजपुर निवासी सुरेन्द्र थियो । उसले सबै मनका कुरा खोल्यो । उसका साथी थोत्रो कार्टुन बोकेर बाहिरि जङ्गल चौरीमा सुत्न गएको छ तर ऊ घरमा त्यो रात सुत्न पाएकामा थोरै भए पनि खुसी छ । साथी र सुरेन्द्रलाई प्रहरीले पक्डेमा कडा सजाय दिनेछ, त्यसैले सुरेन्द्र लुकिछिपी काम खोज्छ हप्तामा बलैले १ दिन काम गर्छ, स्वयम् उसैलाई खान पुग्दैन । घरमा छोराछोरी, परिवार र ठूलो ऋृण छ, त्यो सम्झेर सुरेन्द्र रुन्छ । यो कथा होइन यथार्थ हो, यो पीडा सुरेन्द्रको मात्र होइन, विश्वभर छरिएका अधिकांश प्रवासी नेपालीहरुको व्यथा हो ।



*पैसा कमाउन सिङ्गापुर आइपुगेका नेपाली दाजुभाइहरु जो यो हालतमा-*

सरकार विदेशमा आफ्ना जनतालाई कुल्ली काम गर्न पठाउन जति लाचार छ त्यति नै कुटनैतिक नियोग राजदूतावास खोल्न अक्षम छ । खोल्न चाहन्छ तर प्रस्ताव राख्नसमेत प्रतिष्ठाभन्दा तलको कुरा सम्झन्छ । अन्ततः गरिब सोझा नेपालीले अन्याय र पीडा भोग्नु पर्छ । चाहे मुम्बइमा बेचिने चेलीले होस् या अरब मै मारिनु पर्ने जवानीले । यो समस्या तीतो र सत्य अनि जल्दोबल्दो पनि हो । मामलाई कामका लागि जाने देशमा राजदूतावास जस्ता कुटनैतिक नियोगका लागि सरकार आतुरिनु पर्थ्यो, चिन्तन गर्नु पर्थ्यो; नेपालीलाई परेको अन्यायमा बोल्नु पर्थ्यो, प्रवासीको रगत पसिनामा थोरै भए पनि दुख्नु पर्थ्यो र हामी प्रवासी पनि आफ्नो व्याथामा भुक्नु पर्थ्यो । के सरकारको दायित्व त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल भन्सारमा ३५ देखि ८० प्रतिशत कर लगाई आफ्नै नागरिकलाई लुट्नु मात्र हो ? आत्मसन्तुष्टिका लागि मान्छेले जे पनि गर्छ । वर्षौं पसिना बगाएर एउटा टेलिभिजन किन्छ, उसको रहर पुऱ्याउन चाहन्छ अनि स्वदेश ल्याउँछ । विचरा उसलाई थाहा छैन भन्सारमा कति कर लाग्छ । कतै लेखेर पनि देखाइन्दैन । केबल उसलाई ८० प्रतिशत कर लिने बहानामा तलदेखि माथिसम्मकाले खुलेआम घुस लिन्छ । यही हो नेपाल सरकारको दायित्व ? विदेश लैजाने सामानमा ठूलो निगरानी गर्नुपर्थ्यो । तर व्यक्तिगत प्रयोजनका लागि ल्याइएकामा किन त्यति ठूलो कर ? बरु सरकारले घोषणा गरिदिनु पऱ्यो, भन्सार बैधानिक लुटेराको संगठन (कार्यालय) हो भनेर तब हामीले विदेशमा सिकेको आआफ्नो कौसलको प्रयोगलाई सोच्न विवश हुनेछौं ।

सत्य तथ्याङ्क लुकाई विश्वमा गरिब राष्ट्रको नाम दिई हात फैलाउने सरकारको चलन अत्यन्त निन्दनीय छ । हरियो पासपोर्टमा आफ्ना नागरिकलाई विश्व घुमाउदा कुन मज्जामा भुल्दैछ सरकार । बरु नेपालको भूगोल परिवेशसँग मिल्ने विकसित राष्ट्रको स्वयम् सरकारले भ्रमण गरेर बुझ्नु पर्थ्यो, कार्य शैलीमा सुधार ल्याई आफ्नो दायित्व पूरा गर्नु पर्थ्यो ।

*-प्र.वे.आ.बर्ष ४ को सम्पादकीयबाट*

# के अफगानिस्तानको दिन फर्केकै हो ?

अफगानिस्तानमा तालिवानले शासन गरेको लगभग ६ वर्ष पुगेको थियो । यसको मतलव अफगानी महिलाहरूले अनुहार छोप्न घुम्टो(बुर्का) लगाएको पनि त्यति नै वर्ष भयो । महिलालाई पढ्न र अस्पताल प्रवेश निषेध गरेको र आम बालबालिकालाई मस्जिदमा धार्मिक शिक्षामा सीमित गरिएको पनि ठीक त्यति नै वर्ष पुगेपछि अकस्मात् अफगानिस्तानलाई समयले परिवर्तन गरिदियो । शासक र शासन विना नै भयो केही दिन, विगत ४ वर्षदेखि पानी नपर्नाले प्रायः, सबै भूमि धूलाले छोपिएको र मरूभूमि झै देखिन्थ्यो तर पानी पर्ने कुनै अत्तोपत्तो थिएन र धेरैलाई आस पनि थिएन । उता पिउने पानीको समस्या अधिराज्यभर नै खट्किएको थियो । अफगानीहरूले दिनमा ५ पटक अल्लाहलाई पुकारेर पनि पेट खाली नै हुन्थ्यो । मारामारको नरसंहारले निरन्तरता पाइरहेकै थियो । हिउँ परेर हिमालझैं बन्ने पहाडहरू आगो दन्कला जस्ता सुख्खा थिए । बाँध, कुलो ल्याइने ताल, खोला, नदी सप्पै सुकेको थियो । खडेरी र भोकमरीको ठूलो समस्या परिरहेको थियो । उता विभिन्न ९ जातिबीच आपसमा उग्र गतिले काटमार चलिरहनाले उनीहरूको मन, मस्तिष्क कहाँसम्म उडे होलान्,पीडित उनीहरूलाई मात्र थाहा छ । यहाँ छर्लङ्गिएको छ, मान्छे वर्गीय एवम् व्यवहारमा गरिब भएमा, मन पनि दुखी नै हुन्छ । ती अफगानीहरूले ती दिनहरूलाई के सम्झे होलान् ? देश विदेशको विकास प्रगतिलाई भने टी.भी. रेडियो र इन्टरनेट बन्द गरिएकाले देख्दै देखेनन् र ढुक्कै रहेहोलान् तर कल्पनाचाहिं कस्तो गरे होलान् ? यहाँ गजबको प्रश्नवाचक चिन्हचाहिँ छँदैछ ।

अस्तित्वमा आएका संसारका देशहरूमध्ये सबैभन्दा बढी धर्म र ईश्वरप्रति कट्टर अफगानिस्तान नै हो तर यही देशलाई रूसले बलात्कार गर्छ, पाकिस्तान र इरान गिद्धे दाउ हेर्छ । यही देशमा लाखौंलाख आपसमा हत्या हिंसा हुन्छ, ती मान्छेको आतङ्कमाथि ईश्वरले पनि आतङ्क गर्दा हुन्, आखिर मान्छे प्यासले छटपटाउँछ, उता सामन्ती शासक अरूलाई स्वर्गको लोभ देखाई उनीहरूचाहिँ जिउँदैमा स्वर्गमा झै बेस्सरी मोज लुट्छन् । अन्तत जनताहरू यस्तो अवस्थामा पुगे कि मान्छे मारिन्छ अल्लाहको खेल, ऊ भोकै रहन्छ अल्लाहकै खेल, ऊ चोरी गर्छ अल्लाहकै खेल, ऊ डाँका गर्छ, मान्छे मार्छ, आइमाईलाई खुट्टामा बाँधेर घर भित्रै राख्छ, घर को कोठाभन्दा बाहिर आइमाईले बुर्का लगाई अनुहार छोप्नै पर्छ, बिहान खाना पेटभरि खायो, बेलुकी भोको पेट सुत्यो सबैसबै अल्लाहकै खेल, अल्लाहकै कृपा सम्झन्छन् । अनपढ व्यक्ति अशिक्षित छ मूर्ख छ कुरै खत्तम । पढेलेखेका, डिग्री, पी.एच.डी. गरेका प्रोफेसर, शिक्षक, विद्यार्थी सबैले अल्लाह मात्र देख्नु वडो अचम्म छ । संसारको अन्यअन्य मुलुकमा जाँदा पहिलो प्रश्न देश सोध्ने चलन छ तर यहाँ धर्म सोधिन्छ । धर्म ईश्लाम भनी दिंदा समस्या खतम तर त्यो भन्दा अर्को धर्म बताउनु भयो भने तब ठूलो समस्यामा नै फस्नुहुन्छ । उनीहरू लड्छन् धर्मका लागि र उनीहरू मर्छन् अल्लाहका लागि । उनीहरू निर्धक्क भन्छन् । हामीलाई मर्न डर लाग्दैन, मरेपछि स्वर्ग पुगिन्छ, अल्लाहसँग भेट हुन्छ, अल्लाह सधैं मेरा साथमा हुन्छन् उनीहरू यस्तै भन्छन् र साँच्चै उनीहरू त्यस्तै पनि गर्छन् । एउटा फलामको छडी नै अफगानिस्तानको लागि शासन थियो रे र शासक पनि फलामकै जस्ता । उनीहरू महिलालाई मानवीय मान्यता नदिएझैं

**धर्म र ईश्वरप्रति कटर अफगानिस्तान नै हो तर यही देशलाई रूसले बलात्कार गर्छ, पाकिस्तान र इरान गिद्धे दाउ हेर्छ ।**



*राजधानी काबुलको यो आकाशमाथि फेरि युद्धको बादल नमडारियोस्,*

**..मान्छे मारिन्छ अल्लाहको खेल, ऊ भोकै रहन्छ अल्लाहकै खेल, ऊ चोरी गर्छ अल्लाहकै खेल, ऊ डाँका गर्छ, मान्छे मार्छ, आइमाईलाई खुट्टामा बाँधेर घर भित्रै राख्छ, ... बिहान खाना पेटभरि खायो, बेलुकी भोको पेट सुत्यो सबैसबै अल्लाहकै खेल, अल्लाहकै कृपा सम्झन्छन् ।**

गरेर जति दमन र कडा अनुशासनमा राख्छन् त्यति नै केटा मान्छेहरू पनि प्रेम प्रसङ्ग, यौन क्रियाकलापको चर्चा पटक्कै गर्न रूचाउँदैनन् ।

सन् २००२ को सुरूवातसँगै अस्पस्ट लक्ष्य लिई विभिन्न देशका सैनिकहरू आ-आफ्नो रवाफे शैलीमा राजधानी काबुलमा उत्रन्छन् । उता सरकारको निम्ति कोही अमेरिका, कोही जर्मन, कोही इटाली, इरान आदि देशहरूमा गएर बसेका नेता, राजा  जनताहरु फर्केका छन् । बहुजातीय प्रतिनिधित्व गर्ने समानुपातिक आधारको अन्तरिम सरकारको प्रारूप तयार हुन्छ । अन्तरिम सरकार प्रमुख हमिद करजाय अमेरिकाबाट फर्कन्छन्, अपदस्त भएका भूतपूर्व राजा जाहिर शाह इटालीबाट फर्कन्छन् । हाल महिलामन्त्री रहेकी सिमा सामारा जर्मनबाट फर्कन्छिन् । यसरी नै अरूअरू नेता जनताहरू फर्कन्छन् । लामो समयदेखि लड्दै आएका सबै जाति सम्प्रदायले सरकारमा प्रतिनिधित्व पाउँछन्, लाखौं जनता पाकिस्तान इरानबाट शरणार्थी जीवन छोडेर घर फर्कन्छन् । भत्किएर भग्नावशेष अवस्थामा पुगेको घर कुरेर बसेका छन् । विगत २३ वर्षदेखि चलेको युद्धमा संलग्न वीर योद्धाहरू थाकेर, युद्धदेखि दिग्दारी भएर अब बसेर मूल्याङ्कन गर्न थालेका छन् । रूसका विरूद्ध सिङ्गो देशले युद्ध गऱ्यो र उसलाई जित्यो, त्यसै बेलादेखि सुरूवात भएको साम्प्रदायिक गृहयुद्धमा पास्तुन जातिले हजारा जातिलाई हजारौं हजार माऱ्यो र हजारा जातिले पनि पास्तुनलाई माऱ्यो नै । ताजिक उज्वेक, पठान, एकआपसमा मारामार गरे तर जित्यो कसले ? कसैले जितेन र सबैले हारे । उनीहरूले दुई दशकभन्दा लामो गृहयुद्धबाट के पाए ? ठूलो जनधनको क्षति, राष्ट्रियतामा बेइज्जती, सिङ्गो देशकै प्रगति र विकासमा झण्डै ५० वर्ष पछि परे उनीहरु । आपसमा मारामार गरेर केही पाइँन्दैन र यो अपराधिक काम कहिल्यै टुङ्गिन्दैन भन्ने कुरा बल्ल अब सबैलाई थाहा भएको हुनुपर्छ । त्यसैले तमाम अफगानीहरू युद्ध गर्नु हुन्न जे भयो ठूलो भूल भएछ भनी प्रायश्चित्त गर्दैछन् । समानुपातिक आधारमा बहुजातीय सरकार



बनाएर पास्तुन जातिका १० जना, ताजिक जातिको १० जना, हजारा जातिको ६ जना र उज्वेक जातिको ३ जना गरी जम्मा २९ सदस्यीय मन्त्रीमण्डल रहेको छ । उता अन्तर्राष्ट्रिय आतङ्कवादको आरोप लागेका तालिवान र अलकायदा ग्रुपलाई अमेरिका, क्यानडा, फ्रान्स, अस्ट्रेलिया न्युजिल्यान्ड निमिट्यान्न पार्न जाइलागेका छन् निरन्तर आक्रमणमा सरिक छन् । हेरौं, ती देश कति सफल हुन्छन् । अफगानिस्तानकै पूर्व सरकारलाई ध्वस्त पार्दै यही देशका जनतालाई मार्दैछन् भने यही देशको शान्ति सुरक्षार्थ विभिन्न १८ राष्ट्रका सैनिकहरू काबुलभरि भरिएका छन् । कतिपय स्थानीय जनताहरू पूर्व सरकार, शासनको अन्त्य अलकायदा ग्रुपको बिचल्ली र नयाँ सरकार निर्माणमा खुसी छन् । विशेष सोझासीधा किसानहरूलाई यी सबै कुरामा वास्ता हुन छोडेको छ । अन्तर्राष्ट्रिय सैनिकको आगमनसँगै अफगानिस्तानकै इतिहासमा ४ वर्ष पछि पानी हिउँ पर्नाले अफगानिस्तानका अधिकांश भूभाग खेतीयोग्य भएकाले किसानहरू खेतीतर्फ लागेका छन् । केही महिनाअघि मरूभूमिझैं देखिएका भूभाग दिनानुदिन हरियालीले ढाक्दै लगेको छ । अब केही महिनापछि अन्नबाली भित्रनेछ तब भयावहस्थितिमा रहेका भोका पेट रमाउनेछन् ।

अफगानिस्तानले नयाँ सरकार पाएको छ र नयाँनयाँ सहयोग पाएको छ । सबै जातिले आआफ्नो सम्मान र हकअधिकार पाएका छन् । लामो समयपछि पानी पर्नाले हावापानी खेती, बालीनालीलाई उपयुक्त भएको छ । त्यसैले साँच्चै नै देशको दिन फिरेको जस्तो छ र कामना पनि छ अफगानीहरूको यो खुसी र सुदिन अफै फुलोस् र फलोस् ।

(प्र.वे.आ. बर्ष ४ अङ्क ६ मा प्रकाशित)

*देव्री कार्तोचे, काबुल*

# जातीय मुक्ति आन्दोलनले सफलता प्राप्त गरेको उज्ज्वल इतिहास

अहमत वाहिम २८ वर्षे युवा हो । उसले गत वर्ष अर्थशास्त्र विषयमा डिग्री गरेपछि १२ महिनाको समयमा झण्डै ३० भन्दा बढी ठाउँमा रोजगारीको लागि आवेदन दिनपुग्यो । आज पनि ऊ बेरोजगार छ । उसका बुबाआमा बृद्धा भइसकेका छन् । उनीहरु राजधानी स्कोपे नजिक गाउँमा बस्दछन् । उसको आर्थिक स्थिति अत्यन्तै नाजुक छ तर उसलाई जागिरको जुनसुकै अवसरले पनि साथ दिएन । हो उसले जागिर नपाउनाको मुख्य कारण अल्वेनियाली जाति र इस्लाम धर्मावलम्वी हुनु हो । वाहिमजस्ता दुःखसाथ पढेलेखेका योग्य व्यक्ति यहाँ हजारौं छन् । ती सबै बेरोजगारहरूका कथाका अलिखित दस्तावेजहरू हुन्, जसलाई सरोकारवालाले कहिलै पढ्ने आवश्यकता देखेनन् ।

वाहिम अत्यन्तै फरासिलो साथी हो, मेरो । आजकल म काम गर्ने ठाउँमा नै उसले पनि साधारण काम सघाउने गर्छ । उसले ८ घण्टा काम गरेवापत दिनमा ८ पाउन्ड मात्र ज्याला पाउँछ जुन अति सस्तो दर हो । वर्तमान मेसोडोनिया समस्याबारे प्रश्न गर्दा बडो गम्भीर भई स्पष्टसँग एकपछि अर्को भन्दै जान्छ किनकि ऊ स्वयम् समस्याबाट पीडित व्यक्ति हो । टुक्राटुक्रा हुनु अघि सिङ्गो युगोस्लाभको कम्युनिस्ट शासनको के अनुभव छ ? र आजकल मेसोडोनियाली जनता त्यो शासनप्रति कस्तो मूल्याङ्कन गर्दैछन् ? भन्ने प्रश्नमा वाहिद नजिकैको रेलको लिग र हाइवे रोड देखाउँदै भन्छ- यी सबै त्यसबेला बनेका हुन् जुन बेला मार्सल टिटो (जोसिप ब्रस टिटो २९ नोभेम्बर १९४९, २५ मे १९८१) ले शासन गरिरहेका थिए । त्यसबेला सबैले आ-आफ्नो भाषा, लिपि विद्यालयमा पढ्न



पाउँथे । सेना, प्रहरी प्रशासनको सेवामा पनि सहभागी हुन्थे । बेला मौकामा सरकारमा समेत प्रतिनिधित्व गर्थे अल्वेनियाली जनताले । भनौं, त्यसबेला कुनै भेदभाव थिएन । हाल २६ सदस्यीय मन्त्रिमण्डलमा २ जना अल्वेनियाली सहायकमन्त्री छन् । जोसँग अधिकार र शक्ति छैन । यस बहुदलीय व्यवस्थामा यहाँ ५० वटाभन्दा बढी पार्टीहरु छन् तर यी सबै निरर्थक छन् । विगतका कम्युनिस्ट शासन प्रणालीबारे मलाईभन्दा बढी मेरो बुवालाई अनुभव छ । बुवा त्यसबेलाको धेरै याद गर्नुहुन्छ र पछुताउने गर्नुहुन्छ, आजकल ।

बाल्कन मुलुकभित्रको मेसोडोनिया नेपालभन्दा झण्डै ६ गुणा सानो भूपरिवेष्ठित मुलुक हो । ग्रिस, कोसोभो, बुल्गेरिया, क्रोसिया र अल्वानिया यसको छिमेकी मुलुक हो । पूर्व युगोस्लाभ राज्यका तत्कालीन शासक स्लोवदान मिलोसेबिचको कार्यकाल १९९१ मा स्वतन्त्र बन्न पुगेको मेसोडोनियामा मुख्य दुई समुदाय छन् । मेसोडोनिया जाति ७२ प्रतिशत र अल्वेनियाली २२ प्रतिशत छन् । मेसोडोनियालीहरु अर्थडक्स र अल्वेनियाली इस्लाम धर्म मान्दछन् । यहाँको भौगोलिक बनावट हाम्रो देश नेपालसँग मिल्दोजुल्दो छ भने राजधानी स्कोपे काठमाडौं उपत्यकाजस्तै छ । झण्डै २१ लाखभन्दा कम जनसङ्ख्या भएको यस देशको मुख्य आयस्रोत उद्योगधन्दा र कृषि नै हो । प्रतिव्यक्ति आयस्रोत अमेरिकी डलर १ हजार ५० र साक्षरता प्रतिशत पनि राम्रो छ ।

झण्डै एक वर्ष अघिदेखि जातीय शोषण, अन्यायको विरुद्ध जातीय मुक्तिको खातिर अल्वेनियाली पक्षका विद्रोही मोर्चा, राष्ट्रिय मुक्ति सेनाले मेसोडोनिया सरकार सेनासँग मुक्ति युद्ध गर्दै आएका छन् । गत अगस्टमा सम्पन्न सरकार एन.एल.ए. र नाटोबीचको वार्तापछि हाल यहाँ नाटोका ११ वटाभन्दा बढी मुलुकका सैनिक शान्ति स्थापनार्थ कार्यरत

वार्तापछि एन.एल.ए.ले हातहतियार बुझाउने र मेसोडोनिया सरकारले अल्वेनियालाई सरकारमा सहभागी गराउने, पुलिस, सेनामा भर्ती गराउने उनीहरुको बाहुल्य रहेको ठाउँमा मातृ भाषा चलाउन अनुमति दिने, उच्च शिक्षासम्म उनीहरुकै भाषामा पढाइ..

छन् । वार्तापछि एन.एल.ए.ले हातहतियार बुझाउने र मेसोडोनिया सरकारले अल्वेनियालाई सरकारमा सहभागी गराउने, पुलिस, सेनामा भर्ती गराउने उनीहरुको बाहुल्य रहेको ठाउँमा मातृ भाषा चलाउन अनुमति दिने, उच्च शिक्षासम्म उनीहरुकै भाषामा पढाइ हुने इत्यादि ९ बुँदे सहमतिमा युद्धविराम भएको हो । यसमा प्रत्यक्ष र महत्वपूर्ण भूमिका नाटोको छ ।

वास्तवमा यो एउटा जातीय मुक्ति आन्दोलनले सफलता हासिल गरेको एउटा उज्यालो इतिहास हो । नाटो फौजीको उपस्थितिबाट दुईवटा कुरा ओझेलमा पर्न गए । ती हुन् - अन्तर्राष्ट्रिय दवावमा समय मै वार्ता भई नाटो सैनिकको उपस्थितिबाट अल्वेनियाली मुक्ति सेनाको पूर्ण विजय लिने सपना अधुरो रहनु र अर्को हो गत नरसंहारमा दुईसय निर्दोष जनताको हत्या बाहेक बाँकी सबैलाई हिंसाको सन्त्रास र त्यसबाट मुक्त दिलाउनु । हालसम्ममा मुक्ति सेनाले उनीहरुका ३५ सय हतियार नाटोलाई सुम्पिसकेको छ । अब नाटोको काँधमा आएको जिम्मेवारी उनीहरुका माग सरकारबाट दिलाउने त्यसका लागि सरकारलाई दवाव दिने हो । यो कार्य कति ब्यवहारिक र सफल हुन्छ, भविष्यको गर्भ मै छ त्यो ।

वर्गीय समस्या समाधानसँगै जातीय समस्या समाधान हुन्छ भन्ने मान्यता राख्नेहरुका लागि यो चर्चित समस्या एकदमै राम्रो पाठ हुन सक्छ । धार्मिक, जातीय असहिष्णुताले भित्र्याएको यस अवस्थामा आफै बोक्सी, आफै धामी नाटो र अमेरिकाको खेलौना बन्न बाध्य छ मेसोडोनिया । यहाँका जनता आज मार्सल टिटोलाई सम्झन्छन् र त्यही कम्युनिस्ट व्यवस्थाप्रति तड्पिन्छन् तर त्यो विगत बनिसकेको छ, सिर्फ विगत ।

-विमोचन मासिक, पुस २०५८



# पूर्वी टिमोरलाई पुनः जन्माउँदा

पृथ्वी सुन्तलाजस्तो गोलो छ भनेर मैले बाल्यकालमा पढेको थिएँ । अनि एकपटक विज्ञानको सरलाई प्रश्न गरेको थिएँ- त्यसो भए पानी चाहिँ किन नपोखिएको अर्थात् कसरी अडिएको छ सर ? सहज रुपमा उत्तर पाएँ-पृथ्वीको गुरुत्वकार्षणले । म सन्तुष्ट भएँ तर मेरो मनमा संसारका बारेमा धेरै जिज्ञासाहरु हुन्थे । कति आफै प्रश्नोत्तर गर्थें, कति अनुत्तरित हुन्थे ।

समयको परिवर्तनसँगै मेरो व्यक्तिगत जीवनमा पनि धेरै परिवर्तन आइरहेका थिए । संयोगवश इच्छा, चाहना कुतूहलताका साथ सर्वप्रथम त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थललाई छोडेर दुबइ, जर्मनी हुँदै लन्डनमा पुगेर झण्डै डेढ वर्ष लन्डन नजिक अल्डरसट चर्चक्रुकममा दैनिक जीवनचर्या बिताउन सुरु गरेँ । त्यति लामो अवधिमा के कति जानेर सिकें, कति नजानेर सिकें, अनुभूति गरे उल्लेख गरेर साध्य नहोला । त्यसको लगत्तै सौभाग्यवश पुनः दुवई, श्रीलङ्का, सिङ्गापुर हुँदै भूमध्यरेखीय मुस्लिम देश ब्रुनाइमा पुग्न विवश हुन्छु । सानो सुन्दर, शान्त र सम्पन्न ब्रुनाइको छिमेकी मुलुक मलेसियामा छुटी मनाउन कतिपटक जानुपऱ्यो त्यसको यकिन छैन । नोकरीको सिलसिलामा थाइल्यान्ड, अस्ट्रेलिया, फिजी, इन्डोनेसिया जान भने करै लाग्यो र रहर पनि ।

पश्चिमी शक्तिहरु फुट्दै थिए, जुट्दै थिए । धेरै देशहरुलाई आफ्नो षड्यन्त्रमा पारिरहेका थिए । कुरा आयो कोसोभोको । धर्म र जातीय हिंसाले रङ्गिएको कोसोभोमा नाटोमार्फत् शान्ति सुरक्षाका लागि हामी त्यहाँ जानुपर्ने भयो । त्यस समय म आफ्नो छुट्टी मनाएर नेपालबाट बाटो लागेर ब्रुनाइ पुगेँ । त्यहाँबाट बेलायत पुगेँ । त्यसको लगत्तै केही दिनपछि रेडियो, टेलिभिजन, पत्रपत्रिकामार्फत् कोसोभोमा दुईजना गोर्खालीको मृत्यु भएको समाचार सुन्नमा आयो । जेहोस् त्यो असाधारण घटनाले मलाई निक्कै दुःखी तुल्यायो । त्यसको केही महिनापछाडि गत अगस्टतिरको कुरा हो- इन्डिया र पाकिस्तानबीच सुरु भएको अघोषित कारगील युद्धमा धेरै नेपाली आमाले कोख रित्याए, धेरै श्रीमतीहरुको सिउँदो पुछिए, चुरा फुटाइए । कतिले आफ्नो बुबालाई सदाको लागि गुमाए । कति

नेपालीचाहिँ घाइते लङ्गडो, आँखा नदेख्ने, कान नसुन्ने, हातविना, खुट्टाविना घर फर्कने क्रम चलिरहेका बेला तयारीलाई सावधानीको लागि अर्को सूचना आउँछ । यसमा प्रत्यक्ष, परोक्ष संलग्न हुने मेरो दिनचर्या नै थियो । त्यो अमेरिकाको आडमा कम्युनिस्ट गुरिल्ला दबाउन सफल शासक भू.पू. राष्ट्रपति सुहार्तोको सत्ताच्युत्पछि इन्डोनेसिया सरकार र स्वशासित भूमि पूर्वी टिमोरका बारेमा । जहाँ सोह्रौं शताब्दीताका पोर्चुगलको औपनिवेशिक शासन र दोस्रो विश्वयुद्धमा जापान र अस्ट्रेलियाको युद्ध लडन जाने खेल मैदान बन्यो । त्यसपछि सन् १९७५ मा गृहकलह भएका कारण छिमेकी भूभागको खातिर शान्ति सुरक्षाको कुरामा धावा बोलेर सैनिक शक्तिको आडमा आफ्नो २७ औं प्रान्त बनाउन इन्डोनेसियाले सफलता पायो । यद्यपि इन्डोनेसियाले पूर्वी टिमोर लिनको साथसाथै, पृथकतावादी असाधारण जनता साहसका साथ अनवरत रुपमा विगत २४ वर्षदेखि मुक्तिका निम्ति संघर्षरत रहे । यति लामो आन्दोलनमा झण्डै तीन लाख मानिस मारिएको बताइए पनि अत्याचारी दमनको कारण तथ्य हिसाब नै छैन । इन्डोनेसियाले पूर्वी टिमोरलाई उपेक्षा मात्र गरेन सबैभन्दा अविकसित प्रान्त बनायो । आर्थिक, राजनैतिक, शैक्षिक क्षेत्रमा अत्यन्तै भेदभाव गऱ्यो । टिमोरका आदिवासी टिमोरियम, तेतुम, बेलु आदि जातिहरुलाई वाक स्वतन्त्रता भएन र प्रेस स्वतन्त्रता भएन; मानव अधिकार भएन । सधैं दासदासी बन्नुपर्ने भयो । अन्ततः इन्डोनेसियाबाट पृथक हुने चुनौतीमा उत्रिए । फलस्वरुप संयुक्त राष्ट्र संघका प्रतिनिधिहरुको उपस्थितिमा गत अगस्ट ३० तारिख जनमत संग्रह सम्पन्न भयो । त्यस ऐतिहासिक जनमत सङ्ग्रहले अन्तर्राष्ट्रिय चर्चा परिचर्चा र मान्यता पायो । इन्डोनेसियाबाट पृथक भई छुट्टै स्वतन्त्र राज्य चाहनेको पक्षमा ७८.५ प्रतिशत र आंशिक सुधारसहित इन्डोनेसियामै रहन चाहनेको पक्षमा केवल २१.५ प्रतिशत मतदान भयो । अत्यधिक बहुमतद्वारा पृथक हुन चाहाने पक्षले विजय हासिल गऱ्यो । अन्तर्राष्ट्रिय मान्यताका आधारमा पूर्वी टिमोरले तुरुन्त स्वतन्त्र हुनुपर्ने भयो । तर त्यसो नभई सरकारको कालो षड्यन्त्रमा झन् रक्तपात मच्चिन थाल्यो । इन्डोनेसिया सरकारलाई ती निर्दोष नागरिक मार्ने अधिकार थिएन । तर झन् व्यापक जनहत्या गर्न छोडेनन । त्यसपछि अन्तर्राष्ट्रिय पक्षले बोल्यो, बहर्राष्ट्रिय पक्षले बोल्यो, संयुक्त राष्ट्र संघले बोल्यो ।

म आफ्नो योग्यता, कला, कौसलका साथमा पूर्वी टिमोर जान तल्लीन थिएँ । मसँग एउटा गम्भीर प्रश्न थियो । टिमोर गएर के गर्ने, के बोल्ने कस्को पक्षमा लड्ने ? अर्थात् मेरो दुश्मन को हो ? चिन्तन गरें, निश्चय गरें । म निर्दोष जनताको पक्षमा सत्यताको पक्षमा लड्नेछु । असहाय गरिब दीनदुःखी, टुहुरा र बेसहारालाई उद्धार गर्ने दृढताको साथ टिमोर पुग्न आतुर भएँ । ब्रुनाइबाट बिहानको ३ बजे बाटो लागेर अस्ट्रेलियाको डाविन विमानस्थलमा उत्रिएर रोवर्टसनमा झण्डै एक सातासम्म



बसेर आवश्यक तालिमपछि सेप्टेम्बरको १९ तारिख रातको १२ बजे पुनः ड्राबीन विमानस्थलबाट टिमोरतर्फ साथीहरूका साथ लागें । बिहानको झण्डै ३ बजे पूर्वी टिमोरको अन्तर्राष्ट्रिय विमानस्थल कोरोममा ओर्लिएँ ।

सिरसिर बतास अत्यन्तै आक्रोसित तरिकाले चलिरहेको थियो । आकाशमा चन्द्रमा मुस्कुराइरहेको थियो । सुख्खायामको कारण कतै धूलो तछाडमछाड मडारिँदै, टाढाटाढा पुगिरहेको थियो । बिहानीको पहिलो प्रकाशसँगै म नेपालको आफ्नो गाउँघर, डाँडापाखा घुम्न थालें कल्पनामा । अग्ला र विकट डाँडा, जलेको जङ्गल, धेरै मकैको ढोड, सिम्मल तरुलको बोट, सख्खरखण्डको लहरा इत्यादि हेरेर रमाउन थालें । विमानस्थल नजिकै एउटा सानो गोठजस्तो देखिन्थ्यो । त्यहाँ बिहानीको मिर्मिरेमा भाले बासेको थियो तब म सानोछँदा पहाड, गाउँघरतिर ढिकीजाँतो गरेको याद आयो । मलाई अत्यन्तै कुतूहलता लागेको थियो । मेरो गाउँ नेपाल जस्तोको यस गाउँका मानिस कस्ता होलान् ? यिनीहरुको लवाइख्वाइ, रङ्गरुप, बोलाइ र संस्कार, संस्कृति कस्तो होला ? मेरो जिम्मेवारी र दायित्व गम्भीर थियो । टिमोरको स्थितिमा पनि मिश्रित खतरा र विवादास्पद सङ्केत

**इन्डोनेसियाले पूर्वी टिमोरलाई उपेक्षा मात्र गरेन सबैभन्दा अविकसित प्रान्त बनायो । आर्थिक, राजनैतिक, शैक्षिक क्षेत्रमा अत्यन्तै भेदभाव गऱ्यो**



*टिमोरको यो सामुद्रिक तटझैं टिमोरीहरूको जीवनमा सुन्दरता छाओस् ।*

थियो । तर, मलाई कुन्नि किन हो नौलो अनुभव बेग्लै अनुभूतिले कुत्कुत्याइरहेको थियो । समय निकालेर भाले बासेको घरतर्फ बिस्तारै लागेँ । त्यो गोठजस्तो घरमा चोयाका भाँडाहरु भुण्डिएका थिए । ढोका खुल्लै थिए, अन्दाज लगाउँदा त्यो घर हप्ता दिन अगावै नै मान्छेले छोडेका थिए वा घरधनी शरणार्थी बनेर अन्यत्र पुगेका थिए । अथवा मारिएका हुन सक्थे पत्तै भएन । कुकुरा चाहिँ त्यही घरमा बास बसेको थाहा भयो । एकैछिनमा विमानस्थल वरिपरिका घरहरु जल्न थाले । विमानस्थल गेटमा अन्यत्र शरणार्थी बन्न जानलाई घुइँचो लागेको छ । कसैका हातमा नानी छ, कसैको सानो-सानो झोला र पोकाहरु छन् । हामीलाई देखेर उनीहरु कति चिच्चाए, कति रोए । सायद अब बाँच्न पाउँछु कि भन्ने आसामा रमाएका थिए । उनीहरु भन्न चाहन्थे मेरो घरमा लोग्ने मरेको छ, घाइते भएको छ । श्रीमती बलात्कृत भइरहेकी छिन् । बच्चा मर्नु र बाँच्नुको दोसाँधमा छ । घर जलिरहेको छ, कृपया त्यहाँ गएर मेरो श्रीमान् बच्चालाई बचाइदेऊ तर भाषा असमानताका कारण उनीहरुले भन्न सकेनन् । मात्र उनीहरु बलिन्द्र आँसु झार्दै सुकसुकाइरहेका छन् । न त म त्यहाँ गएमा ती पापीहरुले मार्नेछन्, बलात्कार गर्नेछन् भन्न सकें । आफ्ना खबर- (तपाई कस्तो हुनुहुन्छ ?) स्यापा नामायु(तपाईको नाम के हो ?), माना जालान (कता जाने ?) सलमा पागी (नमस्ते) जस्ता थोरै मात्र पढेर भन्न जानेको मान्छे म उनीहरुलाई के नै सान्त्वना दिन सक्थें र ? भाषामा असमानता थियो । निरीह ती मान्छेका जमात स्थानीय तेतुम, पोर्टुगालिस, इन्डो र मले भाषाबाहेक अङ्ग्रेजी एकाध व्यक्तिले मात्र बोल्दथे त्यही पनि साधारण कुराहरु मात्र । मेलै धेरै नै जानी नजानी सम्झाएँ, आखिर उनीहरुले त्यही नै बुझे होलान्-यसले हामीलाई सम्झाउँदै छ भनेर मैले रङ्गरुप ढाँचा हेरें कोही आमा, दिदी बहिनीजस्ती बुबा दाजुभाइजस्ता ठ्याक्कै नेपालीहरूजस्तै । अवस्था अध्ययन गर्छु । झनै दर्दनाक, कोही हप्तौंदेखि भोकै छन् । कोही नानीको न्वारान गर्ने बेला नानी च्यापेर भोकी सुत्केरी छिन् । कोही बिरामी छन् । कोही लौरी टेकेर हिँडन नसक्ने बूढाबूढी छन् । कोही बेहुलाको लुगा फेर्न नपाई भागेका छन् । बेहुली चाहिँ अपहरण र बलात्कृत भएर अर्कै टापुमा पुऱ्याइएको छ भने कति चेलीबेटीलाई बलात्कार पछि गोली हानी मारिएका छन् । बिहानको झण्डै १० बजेको छ, घामको राप चर्किसकेको छ । अब मैले पनि अगाडि देखेकोभन्दा बेग्लै देख्न थालिसकेको छु । ममा कति आत्मा रोएको छ, कति ममा आक्रोश छ । गालामा हात राख्दै सोच्न थालें- हे भगवान् यो कस्तो संजोग हो ? अनायासै आँखाबाट आँसु बगिरहेछ । साथीहरु कसैले भन्छन्- यहाँ त भर्खरै मान्छे मारेर गाडेको रहेछ । रगत अझै आलो नै छ । अर्कोले भन्छ- मान्छे कुहिएको गन्ध यताबाट आइरहेको छ । यसरी नै दुई दिन मेरो एयरपोर्टको नजिक बित्यो ।

प्राणी सबै उस्तै हो- सबै बाँच्नमै रमाउँछ । आखिर मान्छेले मान्छेलाई किन



मार्छन् त ? एक्काइसौं शताब्दीको संघारमा भौतिक विज्ञान नै सर्वेसर्वा भएको बेला आज पनि किन जाति र धर्मको नाममा लडिरहेका छन् ? के ती लड्ने भिड्ने मानिस दशकौं पछाडि छन् त ? धर्म अफिम हो, भन्ने भनाइलाई आलोचना गर्ने गर्थे कि धर्म लिन र खान नजान्नेको लागि मात्र भनेर । हामीभन्दा धेरै विकसित भएको कोसोभोमा आज जाति र धर्मको विषयमा अल्वानियाली र क्रोसियाली बीच तनाव हुनु र तुत्सीबीच बुरुन्डीको आतङ्क, इसाई र मुसलमानबीच सुडानको तनाव, क्याथोलिक र प्रोटेस्टेन्डबीच आयरल्यान्डको समस्या र टिमोरिस र इन्डोनेसियनबीच भएको पूर्वी टिमोरको यस तनाव मात्र नभएर संसारका विभिन्न मुलुकमा मच्चिएको हिंसा किन ? वर्तमानमा देखिएका आतङ्कहरुमा विशेषत जाति तथा धर्म र वर्गीय सवाल देखिएको छ । जसले हामी सामाजिक प्राणीलाई नै तहसनहस पारिरहेको छ ।

त्यस दुई दिनको एयरपोर्ट नजिकको बसाइपछि, हामी अत्यन्तै सावधानी र चनाखोका साथ कुनै समयमा पोर्चुगलको राजधानीसम्म बनेको ढिली सहर (झण्डै ३ कीमी चौडा र ८ कीमी लम्बाइमा फिजिएको पाइन्छ, त्यसको माथिल्लो भागमा

**.. यो कस्तो संजोग हो ? अनायासै आँखाबाट आँसु बगिरहेछ । ... यहाँ त भर्खरै मान्छे मारेर गाडेको रहेछ ..मान्छे कुहिएको गन्ध आइरहेको छ**



*बाँचेसम्म आस हुन्छ । यी टिमोरी जनताहरू सुखद भविष्यको कामनामा छन्*

रहेको) संयुक्त राष्ट्र संघको प्रतिनिधि कार्यालयतर्फ बाटो लाग्यौं । बाटाको दायाँबायाँ र हेको प्रत्येक भवन दनदनी जलिरहेको थियो । गोला बारुद पडकिरहेका थिए । मान्छे मर्दै थिए । आतङ्क मच्चिरहेको थियो । सहरका बिजुली, टेलिफोन, पानी, यातायत ठप्प छन् । मान्छेहरु पनि एक दुईजना मात्र हिँडडुल गर्छन् । किनेर खानेको त के कुरा, आगो नलागेको घर कहीँ कतै थिएन । बस्ती र सहरका मानिस (समाचारका अनुसार) यसपटकको नरसंहार क्रान्तिमा झण्डै १० हजारभन्दा बढी मान्छे मारिए । बाँकी मान्छे संयुक्त राष्ट्र संघको कार्यालयमा शरणार्थी बने, अझ उनीहरुलाई असुरक्षित भयो यसर्थ लाखौं जनता अग्ला डाँडाडारेमा गएर तीन हप्ताभन्दा अघिदेखि बसिरहेका रहेछन् । सहर घुम्दा जलेका घरहरुमा खरानीबाहेक केही छैन । बरु पर्खालतिर र गतका छिर्काहरु आलो र सुकेका छन् । कति त प्लेटमा खाँदै गरेको आधा खाना छोडेर भागेका छन् । लुगाफाटा सामान लथालिङ्गै छोडेका छन् । कुखुरा, कुकुर, विरालो, सुँगुर, बाखा, गाईवस्तु कति मरेका थिए बाँकी सबै छाडा भएका छन् । एक प्रकारले दृश्य साह्रै अनौठो छ, समग्रमा एउटा प्रलय नै भएजस्तो ।

सहरको भव्य महलमा बस्ने मानिस जङ्गलमा झारपात ओछ्याएर महिनौं लामो समय कन्दमूल पानी खाँदै बस्दा कस्ता भए होलान् ? आफ्नो बारेमा र आफ्नो भविष्य बारेमा कस्तो सोच्लान् उनीहरु नै जानून् । संयुक्त राष्ट्र संघअन्तर्गत विश्व खाद्य संस्थामा संलग्न भई मैले पनि जङ्गलको डाँडा र कुनामा गएर ती शरणार्थीहरुलाई चामल र दाल बाँडेर सेवा गर्न पाउँदा एक प्रकार रमाइलोको अनुभूति भएको थियो र कर्तव्य निर्वाह गरेको गौरव पनि लाग्यो । एक देशको समस्यामा विश्व एक भएर सेवा गर्नु भनेको हाम्रो मानव विश्व अत्यन्तै सुन्दर बनाउनु हो । यस्ता दीर्घकालीन सोच सहयोगात्मक भावनाले संसारलाई स्वर्गमा परिणत गर्न सक्छ । यसरी आपसमा आदर, सम्मान र सरसहयोगले विश्व तेस्रो विश्वयुद्धमा कहिल्यै फस्ने छैन भनेर विश्वस्त हुन सकिन्छ जसले मानिसलाई खुसी र सुखी राख्न सक्छ ।

हामी केही हप्ता संयुक्त राष्ट्र संघ कार्यालयको हाताभित्र बस्यौं । हामी त्यहाँ बस्दाबस्दै राजधानी सहर इलाकामा धेरै शान्ति वातावरण छाइसकेको थियो । बहुराष्ट्रिय शान्ति सेना र सिपोलको सक्रियतामा आतङ्कपूर्ण वातावरणलाई सुधार गर्न ब्रिटिस, अमेरिका, पाकिस्तान, ब्राजिल, थाइल्यान्ड, मलेसिया, इटली, सिङ्गापुर , अस्ट्रेलिया, न्युजिल्यान्ड, फिलिपिन्स, क्यानाडा, इटाली, फ्रान्स, दक्षिण कोरिया, फिजी, अर्जेन्टिना, स्वीडेन, नर्वे, जापान, नेपाल र घानाका सेनाहरु लगायत नेपाल प्रहरी पनि क्रियाशील छन्, त्यहाँ ।



मानवीय सहयोग गर्ने सिलसिलामा म टिमोरको तेस्रो शहर मालियाना पुगेर पुनः काम गर्न सुरु गरें । बाँच्नलाई घर छोडेर भागेकाहरु हामी पुग्ने बित्तिकै धमाधम फर्कन सुरु गरे । घर सबैको जलेका छन् । सुत्ने र बस्ने ठाउँ नभएकाले उनीहरु भेला भएर रातभरि गीत गाउँछन्, गीत गाउँदा र गफ गर्दागर्दा थाकेपछि मच्छर, भुसुना जाडोको प्रवाह नगरी आखिरमा त्यही निदाउँछन्, न ओड्ने न ओछ्याउने, मात्र धर ती ओछ्याउँछन् र आकाश ओढ्छन्, सायद मानिसको कहिलै कसैले नखोस्ने ओढ्ने र ओछ्याउने यही धरती र आकाश होला हगि ! ओहो यो निद्रा देवी पनि कस्तो अचम्मको ! निद्रा वास्तवमा स्वर्ग हो, जव निद्रामा परिन्छ तव दुःखसुख, भोकतिर्खा सबै छट् !

व्यूझेपछिको यथार्थ त छँदैछ । सुख्खा मौसमको कारण बालिनाली खासै छैन । बिहान व्युँझिएर भोकले लर्बराउँदै उनीहरु आँप, रुख कटहर, अम्बा र नरिवलजस्ता फलफूलहरु खान्छन् । उनीहरुको दुश्मन छिमेक छिमेक नै हुन् । त्यसैले ती मिलिसिया इन्डोनेसिया समर्थक समूह आएर स्वाधीनवादी फालिन्टेल ग्रुप हामीलाई मार्ने हो कि भनेर डराउँथे तर हाम्रो आड पाएर- फालिन्टेलहरु निर्धक्क साथ आआफ्नो गाउँ भत्किएको घरमा बसिरहेका छन् । पृथकतावादी नेता सनाना गुस्माओ स्वदेश टिमोर फर्किसकेका छन् । अब पूर्वी टिमोर १४० वर्षपछि स्वतन्त्र बन्ने सुनिश्चित भइसकेको छ । टिमोरबासीहरु सुखी पनि देखिन थालेका छन् । म र साथीहरु चाहिँ चामल, दाल, तेल बाँडिरहेका छौं । उनीहरु टाढाटाढा लिएर जान्छन् र हाम्रो सहयोगप्रति अत्यन्तै खुसी हुन्छन् । अझ पूर्ण स्वतन्त्र बनाई पूर्वी टिमोरलाई पुनः जन्माउँदासम्ममा कति तीता मीठा अनुभवले साथ दिने हो भविष्यकै गर्भभित्र छ ।

*-(विमोचन मासिक)*

# विदेशमा गोर्खाली रेडियो

समयको परिवर्तनसँगै ब्रिटिस गोर्खा सैनिकहरुका निम्ति पनि समाचारमूलक एवम् मनोरञ्जनात्मक रेडियो सेवाको आवश्यकता महसुस भयो । गोर्खालीहरु भारत स्वतन्त्रतासँगै छुट्टिएर सिंगापुरमा आइपुगे । समयक्रममा गोर्खालीहरूका लागि रेडियो कार्यक्रमको आवश्यकता महसुस गरियो र रेडियो स्थापना पनि गरियो । यो ब्रिटिस फोर्सेस ब्रोडकास्टिङ सर्भिस अथवा छोटकरीमा बी.एफ.बी.एस.को नामबाट चिनिन्छ । यो रेडियो सेवाको प्रारम्भ सर्वप्रथम सन् १९६० को दशकमा सिङ्गापुरमा भएको थियो । समयको गतिसँगै सन् १९७९ मा बी एफ वी हङकङमा सऱ्यो । हङकङलाई चीनले लिएपछि सबै गोर्खालीहरु बेलायत र ब्रुनाइमा मात्र सीमित हुन पुगे । फलस्वरुप बी.एफ.बी.एस. हङकङ बन्द हुन गयो । यो रेडियो सेवाको हङकङ यात्रालाई सबैभन्दा महत्वपूर्ण मानिन्छ अथवा यो रेडियो सेवाको प्रसङ्गमा हङकङलाई उल्लेख नगरे चर्चा अधुरो नै रहन्छ ।

सन् १९७९ मा ब्रिटिस सैनिक आकाशवाणी सेवा ब्रुनाइ र नेपालको काठमाडौंमा स्थापना गरिएको थियो । हाल ब्रुनाइ बी.एफ.बी.एस.ले एफ.एम. ८९.५ मेघाहर्जमा नेपाली रेडियो सेवा प्रसारण गर्दछ । बी.एफ.बी.एस.ले ब्रुनाइस्थित हप्तामा दैनिक १३ घण्टा र छुट्टिका दिन आइतवार नियमित १४ घण्टा प्रसारण सेवा पुऱ्याउँदै आएको छ । यो रेडियो सेवाले श्रोताहरुलाई ताजा समाचार तथा मनोरञ्जन प्रदान गर्दै आएको छ । बी.एफ.बी.एस. ब्रुनाइ, बी.एफ.बी.एस. बेलायत र बी.एफ.बी.एस. काठमाडौं आपसमा एक अर्काका परिपूरक हुन् । काठमाडौंबाट समाचार तथा अनुकूल सामग्रीहरु श्रोताहरुसमक्ष पस्कन यो रेडियो सेवा सफल भएको छ । बी.एफ.बी.एस. ब्रुनाइले बी.बी.सी. नेपाली सेवा र हिन्दी सेवालाई प्रत्यक्ष प्रसारण गरेवाट यसको महत्व र लोकप्रियता अत्यधिक बढेको पाइन्छ । बी.एफ.बी.एस. ब्रुनाइले आफ्नो कार्यक्रम बेलायत (फोकल्यान्ड) पठाउने र आर.टी.भी. तथा ब्रुनाइ रेडियोलाई उपलब्ध गराउँदै आएको छ । झण्डै ४५



सय नेपालीहरु सेवारत ब्रुनाइबाट प्रसारित रेडियो कार्यक्रम नेपाली र भारतीय मूलका मानिसहरुले मुख्य रुपमा सुन्न रुचाउँछन् । ब्रुनाई रेडियोबाट प्रसारित कार्यक्रम ब्रुनाइ तथा ब्रुनाइ नजिकको मलेसियामा रहेका अधिकांशले सुन्न सक्छन् ।

जति लामो ब्रिटिस गोर्खाको इतिहास छ, त्यति नै परिवर्तन र उपलब्धिहरु हुँदै आएका छन् । अब बुनाइबाट प्रसारित नेपाली कार्यक्रम भू-उपग्रहमार्फत् बेलायतको डोभरमा पनि केही समयपछि नै प्रसारण हुने भएको छ । यस प्रसारणले विदेशमा बसेका नेपालीहरुलाई स्वदेशसँग नजिक बनाउने महत्वपूर्ण काम गर्न थप सहयोग पुऱ्याउने आशा गरिएको छ । उक्त रेडियो सेवा बेलायत तथा डोभर क्षेत्रमा बसोबास गर्ने नेपालीहरुका लागि उपयोगी हुने अनुमान गरिएको छ ।

बी.एफ.बी.एस. ⁄ब्रुनाइद्वारा प्रसारित हुने कार्यक्रमहरुमा पहिलो सभा क्रमश: बिहान ६ बजे प्रारम्भिक धुन, उद्घोषण, कार्यक्रम झलक, धार्मिक कार्यक्रम स्वदेशतिरको समाचार, वैदेशिक विनिमय दर, सुनको दर-भाउ, मौसमको सूचना, अङ्ग्रेजीमा विश्व समाचार, बी.बी.सी. नेपाली सेवा कार्यक्रम, रङ्गमञ्च कार्यक्रम, अतीतका गीत, गीतमाला, फोन-इन कार्यक्रम, नेपाल दर्पण, नेपाली गीत, हिन्दी गीत, कविता कुसुम, स्थानीय कलाकारका गीत, नेपाली राष्ट्रिय गीत, बटुलबाटुल, काठमाडौंबाट प्राप्त तपाईका लागि सन्देश, गीतगुञ्जन, घटना र विचार, साप्ताहिक समीक्षा, काठमाडौंको कोसेली, बी.बी.सी. हिन्दी सेवा, सांसद फोनइन, नेपाली लोकगीत, महिला जगत् र नेपाली पप गीतजस्ता कार्यक्रम साताभरि प्रसारण हुन्छन् ।

पहिलो सभाको कार्यक्रम दिउँसो ३:४५ मा समाप्त हुन्छ । बेलुकी सात बजेदेखि शुभारम्भ हुने दोस्रो सभाका कार्यक्रमहरु प्रारम्भिक धुन, उद्घोषण, कार्यक्रम झलक, नेपाली⁄हिन्दी भजन, जन्म दिवसको गीत, एकै कलाकारको गीत, स्वदेशतिरको समाचार, घटना र विचार, नेपाली गीत, माग अनि सम्झना, गीतमाला, एकै चलचित्रको गीत, रोधीं, हिन्दी गीत, एकै सङ्गीतकारका गीत, मन चाहे कार्यक्रम, हिन्दी गजल, सांसद फोनइन, साप्ताहिक समीक्षा र देउराली, बी.बी.सी. नेपाली सेवाको प्रत्यक्ष प्रसारण र अन्तमा गीत गजलपछि राति १२ बजे दोस्रो सभाको कार्यक्रम समाप्त हुन्छ । यी कार्यक्रमहरु पालैपालो हप्ताभरिमा प्रसारण गरिन्छ । प्रसारित कार्यक्रम सुन्ने जो कसैलाई पनि बी.एफ.बी.एस.प्रति अत्यन्तै माया हुन्छ । स्वदेश फर्केका नेपाली लाहुरे तथा तिनका परिवार पनि पत्राचारद्वारा बी.एफ.बी.एस.को कार्यक्रममा सहभागी बनिरहेका हुन्छन् । बी.एफ.बी.एस. ब्रुनाई हाल पुरानो प्रसारण केन्द्र नजिकै बनेको नयाँ प्रसारण केन्द्र, भवनबाट प्रसारण हुन्छ, जुन भवनभित्र नेपाली र अङ्ग्रेजी विभाग छन् ।

□□□

# दक्षिण पूर्वी फिजी गणतन्त्रको नेपाली भिलेज एक यात्रा

सुदूर दक्षिणी गोलार्द्धको टापु फिजी गणतन्त्रमा नेपालीहरुको बस्ती 'नेपाली भिलेज' छ भनेर कमैलाई मात्र थाहा छ । जब काम विशेषले म ब्रुनाइबाट त्यहाँ जानुपर्ने भयो तब त्यस गाउँको बारेमा केही कुरा सुनें नभन्दै विगत जुलाई ७ तारिख २००० मा फिजीतर्फ लागे । बिहानको सूर्योदयसागै फिजीको नादी (Nadi) एयरपोर्टमा उत्रिएपछि फिजीको दोस्रो ठूलो सहर अर्थात् चिनीको सहर (Sugar City)



*फिजी गोरखा भिलेजका बाजे बिक्रम सिंहका साथमा लेखक*



लोटोका (Lautoka) पुगें । त्यसको केही दिनपछि डेढ घण्टाको बाटो हुँदै सिङ्गातोका (Sigatoka) पुगेर नेपाली भिलेज जाने बाटाको बारे सोधपुछपछि ट्याक्सी लिएर पहाडको फेदीतर्फ हाँकिएँ । झण्डै १५ कि.मि. पुगनपुग रमाइला चुचुरा भएको ठाँउ झण्डै भित्रीमधेशजस्तो लाग्ने ठाउँ देखिन थाल्यो । केही छिन्पछि एक नेपालीको घरको आँगनमा उत्रिएँ । त्यहाँ औपचारिक कुराकानीको साथै हामीलाई अत्यन्तै राम्रो सत्कार भयो । उमेरका हैसियतले गाउँकै बूढापाका मानिने उहाँ विक्रमसिं हुनुहुँदोरहेछ । व्यावहारिक कराको क्रममा बाजे विक्रमसिंले भन्नुभयो-हामी यस इलाकामा लगभग ६० घर जति छौं । मेरा बुबाले नेपाली राम्रो बोल्नुहुन्थ्यो, मचाहिँ त्यति धेरै जान्दिन । वास्तवमै उहाँ 'नमस्ते' 'कस्तो हुनुहुन्छ ?' आदि शिष्टाचारका शब्द बाहेक अरु जान्नुहुन्नथ्यो । बिहानको साँढे ११ बजिसकेकाले खानाको समय झण्डै बित्न लागेको थियो । बाजेले गुनासो पोख्नुभयो-अलि अगाडि तपाईहरु आउने कुरा थाहा भएको भए खसी काटेर हामी खुसियाली मनाउन सक्थ्यौं । तर, मेरो छोरो उसको अफिस गयो, त्यसैले आज यहीँ बस्नुपर्छ, आग्रह गर्नुभयो । व्यावहारिक कुराकै क्रममा उहाँको एउटा छोरा अमेरिका, एउटा अस्ट्रेलिया, एउटाचाहिँ फिजीको राजधानी सुभामा बैंक म्यानेजर रहेछन् । बुहारी पनि गोरेनी नै रहिछिन् । तपाईहरु कहिले फिजी आउनुभयो भन्ने प्रश्नमा बाजे भन्नुहुन्छ- गिर्मिट टाइम (Girmit Time) मा अर्थात् सन् १८७८ ताका इन्डिया हुँदै उखु खेतीका लागि हामी आएका हौं । नेपाल घर कहाँ हो ? मलाई यकिन थाहा छैन, बुबाले भन्नुहुन्थ्यो, दार्जिलिङ नजिकबाट आएको हो रे । संवादकै बेला बाजेका नातिनी आर्तिका बोलाउने

**मेरा बुबाले नेपाली राम्रो बोल्नु हुन्थ्यो, मचाहिँ त्यति धेरै जान्दिन । वास्तवमै उहाँ 'नमस्ते' 'कस्तो हुनुहुन्छ ?' आदि शिष्टाचारका शब्द बाहेक अरू जान्नु हुन्नथ्यो**

नाम पिङ्की बहिनी पनि हामीसँग धेरै हिन्दी र अङ्ग्रेजीमा गफ गरिन् । केही छिन्पछि हामी छिमेकी नेपालीको घरतिर घुम्न गयौं । नजिकैको सत्यानन्द प्रधानको घर रहेछ । वरिपरि थुप्रै बस्तीहरु थिए, डाँडामा हिन्दू मन्दिर पनि बनाइएको रहेछ । खेतीपातीको सवालमा उखुचाहिँ फिजीको पर्यायवाची शब्द नै रहेछ । समग्रमा भन्नुपर्दा उखु यहाँ खेती मात्र गरिन्छ । उखुले धानेको फिजी । फिजीको नेपाली भिलेजमा मात्र नभई सहरमा पनि धनीमानी नेपालीहरु बस्दा रहेछन् भने नेपाली भ्लेजका नेपालीहरुको जीवनस्तर पनि उच्च छ । शिक्षित समाज छ । नेपाल र नेपाली भन्ने बित्तिकै उनीहरु श्रद्धा गर्दछन्; अनि गौरव पनि । नेपाली भाषाचाहिँ एकाध बूढापाकाले मात्र बोल्ने गर्दछन् । उनीहरुको कुलकुटुम्ब भारतीय मूलका हिन्दू सम्प्रदायसँग हुन्छ । फिजीका नेपालीहरु त्यहाँका आदिवासी काला जातिलाई पनि अत्यन्तै सरसहयोग गर्ने गर्छन् । त्यहाँका आदिवासी रेड इन्डियन र हिन्दू सम्प्रदायबीच जति द्वन्द छ, नेपालीहरुसँग खासै छैन ।

वरिपरि गाउँ घुमेपछि आग्रहअनुसार पुनः बाजे विक्रमसिंको घरमा आइपुग्यौं । कति चाँडै भाउजू द्वय र बहिनी पिङ्कीले खाना तयार गरिसक्नुभएको रहेछ । हामी खानामा लाग्यौं, त्यहाँ नेपाली खाना, इण्डियन खाना, युरोपीयन खाना तयारी रहेछ, एउटा गाउँमा यतिविघ्न परिकार



*फिजीको एडभान्चर डाइभिङ समाप्तिपछि, लेखक देब्रे आगाडि छेउमा*



तयार हुनु अस्वाभाविक थियो । बाजेले खसी काट्न नपाएकामा दुःख मान्दै हुनुहुन्थ्यो तर भाले काटेरै छाड्नु भएछ । यसरी दक्षिण गोलार्द्धको अस्ट्रलियादेखि पनि पूर्व पर्ने अत्यन्तै टाढा फिजीमा नेपालीहरुसँग साक्षात्कार गर्न पाउँदा खुसीको कुनै सीमा रहेन ।

'छुट्नलाई भइगयो बेला, फेरि भेट होला कि नहोला', यसरी मन एकतमासले खेलिरहेको थियो । मेरो १ महिनाको काम सिद्धिएपछि अगस्ट १५ तारिख बिहान पुनः 'नादी' एयरपोर्ट पुगें र बाजे विक्रमसिं, बहिनी पिङ्कीलगायत सबै नेपालीहरु, फिजीका साथीहरुलाई एयरपोर्टबाट फोन गरी बिदा मागें । त्यसबेलाको समय बिहानको ठीक ९ बजेको थियो । जहाज अस्ट्रेलियातर्फ धकेलियो । झ्यालबाट फिजीलाई हेरिरहें । जहाज समुद्रबीच हराउन पुग्यो । फिजी एकैछिनमा छलियो । तर गोर्खा भिलेज र फिजीको माया मसँग रहिरह्यो । सायद फिजीको यात्रा त्यही पहिलो थियो, त्यही नै अन्तिम पनि... ।

*-प्रवासी वेदनाका आवाजहरु, वर्ष २, अङ्क २)*